# नेपाल सरकारको अर्थ सम्बन्धी प्रस्तावलाई कार्यान्वयन गर्न बनेको अध्यादेश

प्रस्तावना : नेपाल सरकारको आर्थिक वर्ष २०७०/०७१ को अर्थ सम्बन्धी प्रस्तावलाई कार्यान्वयन गर्नको निमित्त राजस्व संकलन गर्ने, कर घटाउने, बढाउने, छुट दिने तथा राजस्व प्रशासन सम्बन्धी कानून संशोधन गर्ने सम्बन्धमा तत्काल कानूनी व्यवस्था गर्न आवश्यक भएको र हाल व्यवस्थापिका-संसद नभएकोले,

नेपालको अन्तरिम संविधान, २०६३ को धारा ८८ को उपधारा (१) बमोजिम मन्त्रिपरिषद्को सिफारिसमा राष्ट्रपतिबाट यो अध्यादेश जारी भएको छ ।

१. संक्षिप्त नाम र प्रारम्भ : (१) यस अध्यादेशको नाम "आर्थिक अध्यादेश, २०७०" रहेको छ ।

(२) यो अध्यादेशको दफा १, २, ३, ४, ५ र १० तुरुन्त प्रारम्भ हुनेछन् र अन्य दफाहरु सम्वत् २०७० साल साउन १ गतेदेखि लागू हुनेछन् ।

२. भन्सार महसुल : (१) विदेशबाट नेपालभित्र पैठारी हुने मालवस्तुहरूमा अनुसूची-१ बमोजिम भन्सार महसुल लगाइने र असूलउपर गरिनेछ ।

(२) नेपालबाट विदेशमा निकासी हुने मालवस्तुहरूमा अनुसूची-२ बमोजिम भन्सार महसुल लगाइने र असूलउपर गरिनेछ ।

३. भन्सार सेवा दस्तुर : नेपालबाट विदेशमा निकासी हुने र विदेशबाट नेपालमा पैठारी हुने मालवस्तुको प्रति प्रज्ञापनपत्रमा निकासी बापत एक सय रुपैंया र पैठारी बापत पाँच सय रुपैंया भन्सार सेवा दस्तुर लगाइने र असूलउपर गरिनेछ ।

तर निकासी महसुल लाग्ने मालवस्तुहरू, कूटनैतिक तथा महसुल सुविधामा निकासी वा पैठारी हुने मालवस्तुहरू तथा महसुल तिरी अस्थायी पैठारी हुने मालवस्तुहरू, हवाईमार्गबाट यात्रुले आफूसँगै लैजाने मालवस्तुहरू र पाँच हजार रुपैंयासम्म मूल्यको निकासी वा पैठारी हुने मालवस्तुहरूमा भन्सार सेवा दस्तुर लाग्ने छैन ।

४. कृषि सुधार शुल्क : आर्थिक वर्ष २०७०/०७१ मा अनुसूची-१ को दफा १६ मा उल्लिखित मालवस्तु पैठारी हुँदा पैठारी मूल्यमा पाँच प्रतिशतका दरले कृषि सुधार शुल्क लगाइने र असूलउपर गरिनेछ।

तर त्यस्ता मालवस्तुहरूको पैठारी हुँदा भन्सार महसुल लाग्ने रहेछ भने त्यस्तो पैठारीमा कृषि सुधार शुल्क लाग्ने छैन ।

५. अन्तःशुल्क : आर्थिक वर्ष २०७०/०७१ मा नेपालभित्रको मिल वा कारखानामा उत्पादन वा तयार भएका मालवस्तु, पदार्थ वा पैठारी भएका मालवस्तु, पदार्थ वा सेवामा अन्तःशुल्क ऐन, २०५८ बमोजिम अन्तःशुल्क लगाईने र असूलउपर गरिनेछ ।

६. मूल्य अभिवृद्धि कर : आर्थिक वर्ष २०७०/०७१ मा मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम मूल्य अभिवृद्धि कर लगाइने र असूलउपर गरिनेछ ।

७. स्वास्थ्य सेवा कर : (१) आर्थिक वर्ष २०७०/०७१ मा नेपाल सरकारले प्रदान गर्ने स्वास्थ्य सेवा र सामुदायिक अस्पतालहरूले प्रदान गर्ने स्वास्थ्य सेवा बाहेकका अन्य निकायहरूले प्रदान गर्ने स्वास्थ्य सेवाहरूमा जारी बिजक मूल्यको पाँच प्रतिशतका दरले स्वास्थ्य सेवा कर लगाइने र असूलउपर गरिनेछ ।

(२) उपदफा (१) बमोजिमको स्वास्थ्य सेवा कर त्यस्तो सेवा प्रदान गर्ने व्यक्ति, संस्था वा निकायले बिजक जारी गरी असूलउपर गर्नु पर्नेछ ।

(३) उपदफा (२) बमोजिम स्वास्थ्य सेवा कर असूल गर्ने व्यक्ति, संस्था वा निकायले असूल गरेको रकम र सोको विवरण चौमासिक रुपमा प्रत्येक चौमासिक अवधि समाप्त भएको पच्चीस दिनभित्र सम्बन्धित आन्तरिक राजस्व कार्यालयमा दाखिला गर्नु पर्नेछ ।

(४) उपदफा (३) बमोजिमको म्यादभित्र कर दाखिला नगरेमा वार्षिक पन्ध्र प्रतिशत ब्याज र विवरण दाखिला नगरेमा प्रति विवरण एक हजार रुपैंया असूलउपर गरिनेछ ।

(५) उपदफा (३) बमोजिमको चौमासिक अवधि समाप्त भएको तीन महिनाभित्र बाँकी स्वास्थ्य सेवा कर नबुझाउने व्यक्ति, संस्था वा निकायद्वारा सञ्चालित कारोबारलाई बन्द गर्न कर अधिकृतले आदेश दिन सक्नेछ ।

(६) स्वास्थ्य सेवा कर बुझाउने स्वास्थ्य संस्थाले स्वेच्छिक रुपमा मूल्य अभिवृद्धि करमा दर्ता हुन पाउनेछन् ।

(७) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि उपदफा (६) बमोजिम दर्ता भएका स्वास्थ्य संस्थाबाट मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम मूल्य अभिवृद्धि कर असूल गर्नु पर्नेछ ।

(८) उपदफा (६) बमोजिम मूल्य अभिवृद्धि करमा दर्ता भएको स्वास्थ्य संस्थाबाट दर्ता भएको मितिले पाँच वर्षसम्म मूल्य अभिवृद्धि कर मात्र असूल गर्नु पर्नेछ ।

(९) उपदफा (१) बमोजिमको स्वास्थ्य सेवा करको कार्यविधि आन्तरिक राजस्व विभागले निर्धारण गरे बमोजिम हुनेछ ।

(१०) स्वास्थ्य सेवा करको प्रशासन आन्तरिक राजस्व विभाग र सो विभाग अन्तर्गतका कार्यालयबाट हुनेछ । त्यस्तो कार्यालय नभएको जिल्लामा सो विभागले तोकेको प्रक्रिया बमोजिम कोष तथा लेखा नियन्त्रक कार्यालयले स्वास्थ्य सेवा करको प्रशासन गर्नेछ ।

८. शिक्षा सेवा शुल्क : (१) आर्थिक वर्ष २०७०/०७१ मा निजी क्षेत्रबाट सञ्चालित देशभरिका उच्च माध्यमिक शिक्षाभन्दा माथिको शिक्षा प्रदान गर्ने शिक्षण संस्थाहरु, काठमाडौं उपत्यकाभित्र तथा उप-महानगरपालिका, नगरपालिका र जिल्ला सदरमुकाम तथा आन्तरिक राजस्व विभागले तोकेको स्थानमा संचालित शिक्षण संस्थाहरुको हकमा सवै तहको शिक्षा प्रदान गर्ने शिक्षण संस्थाहरुले असूल गर्ने भर्ना शुल्क र मासिक शिक्षण शुल्कमा एक प्रतिशतका दरले शिक्षा सेवा शुल्क लगाइने र असूलउपर गरिनेछ ।

स्पष्टीकरणः यस दफाको प्रयोजनको लागि “निजी क्षेत्रबाट सञ्चालित शिक्षण संस्था” भन्नाले तालीम तथा पुनर्ताजगी तालीम प्रदान गर्ने संस्था बाहेक प्रचलित कानून बमोजिम दर्ता भएका र निजी क्षेत्रबाट सञ्चालित विश्वविद्यालय, महाविद्यालय, विद्यालय तथा प्राविधिक शिक्षालय लगायत जुनसुकै किसिमको शिक्षा प्रदान गर्ने निकायलाई सम्झनु पर्छ ।

(२) उपदफा (१) बमोजिमको शुल्क पिछडिएका एवं दुर्गम क्षेत्रका विपन्नवर्गका विद्यार्थीहरूको हितमा खर्च गरिनेछ ।

(३) उपदफा (१) बमोजिमको शिक्षा सेवा शुल्क त्यस्ता शिक्षण संस्थाहरूले बिजक जारी गरी असूलउपर गर्नु पर्नेछ । कुनै शिक्षण संस्थाले शिक्षा सेवा शुल्क असूल हुने गरी बिजक जारी नगरेमा आन्तरिक राजस्व कार्यालयले प्राप्त सूचनाका आधारमा

त्यस्ता शिक्षण संस्थाको सम्पूर्ण कागजात तथा आर्थिक र प्रशासनिक कक्ष आफ्नो कब्जा तथा नियन्त्रणमा लिन सक्नेछ ।

(४) उपदफा (३) बमोजिम शिक्षा सेवा शुल्क असूल गर्ने शिक्षण संस्थाले असूल गरेको रकम र सोको विवरण चौमासिक रुपमा प्रत्येक चौमासिक अवधि समाप्त भएको पच्चीस दिनभित्र आन्तरिक राजस्व कार्यालय भएको जिल्लामा सो कार्यालयमा र आन्तरिक राजस्व कार्यालय नभएको जिल्लामा कोष तथा लेखा नियन्त्रक कार्यालयमा दाखिला गर्नु पर्नेछ ।

(५) उपदफा (४) बमोजिमको म्यादभित्र शिक्षा सेवा शुल्क दाखिला नगरेमा वार्षिक पन्ध्र प्रतिशत ब्याज र विवरण दाखिला नगरेमा प्रति विवरण एक हजार रुपैंया असूलउपर गरिनेछ । तीन महिनासम्म पनि शिक्षा सेवा शुल्क दाखिला नगर्ने शिक्षण संस्थालाई नेपाल सरकारले बन्द गर्न आदेश दिन सक्नेछ ।

(६) विदेश अध्ययन गर्न जाने विद्यार्थीलाई शिक्षण शुल्क बापत विदेशी मुद्राको सटही सुविधा दिँदा त्यस्तो सटही रकममा एक प्रतिशत शिक्षा सेवा शुल्क लगाइनेछ र असूलउपर गरिनेछ ।

(७) उपदफा (६) बमोजिम विदेशी मुद्राको सटही सुविधा उपलब्ध गराउने बैङ्कले शिक्षा सेवा शुल्क बापत संकलन गरेको रकम अर्को महिनाको पन्ध्र गतेभित्र राजस्व खातामा जम्मा गरी सोको विवरण सहितको जानकारी सम्बन्धित आन्तरिक राजस्व कार्यालयमा पठाउनु पर्नेछ ।

(८) शिक्षा सेवा शुल्क संकलन सम्बन्धी अन्य कार्यविधि आन्तरिक राजस्व विभागले निर्धारण गरे बमोजिम हुनेछ ।

(९) शिक्षा सेवा शुल्कको प्रशासन आन्तरिक राजस्व विभाग र सो विभाग अन्तर्गतका कार्यालयबाट हुनेछ । त्यस्तो कार्यालय नभएको जिल्लामा सो विभागले तोकेको प्रक्रिया बमोजिम कोष तथा लेखा नियन्त्रक कार्यालयले शिक्षा सेवा शुल्कको प्रशासन गर्नेछ ।

(१०) आर्थिक वर्ष २०६५/०६६ को बुझाउन बाँकी शिक्षा सेवा कर र आर्थिक वर्ष २०६६/०६७, २०६७/०६८ र २०६८/०६९ को विवरण सहित शिक्षा सेवा शुल्क २०७० साल पौष मसान्तभित्र बुझाएमा त्यस्ता शिक्षण संस्थाले विवरण ढिला बुझाए बापतको रकम र ब्याज मिन्हा हुनेछ ।

(११) आर्थिक वर्ष २०६५/०६६ को शिक्षा सेवा कर र आर्थिक वर्ष २०६६/०६७, २०६७/०६८ र २०६८/०६९ को शिक्षा सेवा शुल्क नबुझाएका शिक्षण संस्थाहरुको नाममा आन्तरिक राजस्व कार्यालयबाट कर निर्धारण भएको शिक्षा सेवा कर वा शिक्षा सेवा

शुल्क बापतको रकम २०७० साल पौष मसान्तभित्र बुझाएमा सो कर वा शुल्क निर्धारण गर्दा लागेको ब्याज तथा जरिवाना एवं बक्यौता रकममा लाग्ने ब्याज तथा जरिवाना मिन्हा हुनेछ ।

(१२) उपदफा (१०) वा (११) बमोजिमको सुविधा आर्थिक वर्ष २०६९/०७० को शिक्षा सेवा शुल्क बुझाउने शिक्षण संस्थाहरुको हकमा मात्र लागू हुनेछ ।

(१३) उपदफा (१२) मा जुनसुकै कुरा लेखिएको भए तापनि सार्वजनिक गुठी अर्न्तगत दर्ता भई संचालनमा रहेका शिक्षण संस्थाहरुले २०७० बैशाखदेखिको शिक्षा सेवा शुल्क बुझाएमा सो भन्दा अघिको आफूले संकलन नगरेको शिक्षा सेवा शुल्क र सो मा लाग्ने ब्याज तथा जरिवाना मिन्हा हुनेछ ।

(१४) यस दफा बमोजिम शिक्षा सेवा शुल्क संकलन गर्ने शिक्षण संस्थाले कम्पनी ऐन, २०६३ बमोजिम कम्पनी रजिष्टारको कार्यालयमा बुझाउनु पर्ने बिबरण २०७० साल पौष मसान्तभित्र बुझाएमा त्यसरी ढिलो बिवरण बुझाए बापत कम्पनी ऐन, २०६३ को दफा ८१ बमोजिम लाग्ने जरिवाना सम्बन्धित आन्तरिक राजस्व कार्यालय वा आन्तरिक राजस्व कार्यालय नभएको जिल्लामा कोष तथा लेखा नियन्त्रक कार्यालयको सिफारिसमा मिन्हा हुनेछ ।

तर आर्थिक वर्ष २०६९।०७० सम्मको शिक्षा सेवा कर तथा शिक्षा सेवा शुल्क चुक्ता नगर्ने शिक्षण संस्थालाई यो सुविधा प्राप्त हुनेछैन ।

(१५) जिल्ला शिक्षा कार्यालय वा अन्य सरकारी निकायले शिक्षण संस्थालाई जुनसुकै किसिमको सेवा, सुविधा वा सिफारिश उपलब्ध गराउँदा त्यस्तो शिक्षण संस्थाले साविकमा बाँकी रहेको बक्यौता शिक्षा सेवा कर तथा शिक्षा सेवा शुल्क बुझाएको प्रमाण पेश गरेपछि मात्र सो सेवा सुविधा वा सिफारिश उपलब्ध गराउनु पर्नेछ ।

९. सडक निर्माण तथा सम्भार दस्तुर र सवारी साधन कर : आर्थिक वर्ष २०७०/०७१ मा अनुसूची-३ बमोजिम सडक निर्माण तथा सम्भार दस्तुर र सवारी साधन कर लगाइने र असूलउपर गरिनेछ ।

१०. सडक मर्मत तथा सुधार दस्तुर : आर्थिक वर्ष २०७०/०७१ मा सडक मर्मत तथा सुधार गर्न विदेशबाट नेपालमा पैठारी हुने पेट्रोलमा प्रति लिटर चार रुपैंया र डिजेलमा प्रति लिटर दुई रुपैंया

सडक मर्मत तथा सुधार दस्तुर भन्सार बिन्दुमै लगाइने र असूलउपर गरिनेछ ।

११. घरजग्गा रजिष्ट्रेशन दस्तुर, सेवा शुल्क र रोक्का दस्तुर : आर्थिक वर्ष २०७०/०७१ मा अनुसूची-४ बमोजिम घरजग्गा रजिष्ट्रेशन दस्तुर, सेवा शुल्क र रोक्का दस्तुर लगाइने र असूलउपर गरिनेछ ।

१२. चलचित्र विकास शुल्क : आर्थिक वर्ष २०७०/०७१ मा अनुसूची-५ बमोजिम चलचित्र विकास शुल्क लगाइने र असूलउपर गरिनेछ ।

१३. प्रदुषण नियन्त्रण शुल्क : (१) आर्थिक वर्ष २०७०/०७१ मा नेपालभित्र बिक्री वितरण हुने पेट्रोल तथा डिजेलमा प्रति लिटर पचास पैसाका दरले प्रदुषण नियन्त्रण शुल्क लगाइने र असूलउपर गरिनेछ ।

(२) उपदफा (१) बमोजिमको शुल्क नेपाल आयल निगमले असूल गरी प्रत्येक महिनाको शुल्क अर्को महिनाको पच्चीस गतेभित्र राजस्व खातामा दाखिला गर्नु पर्नेछ । सो अवधिभित्र दाखिला नगरेमा वार्षिक पन्ध्र प्रतिशत व्याज सहित असूलउपर गरिनेछ ।

(३) यस दफा बमोजिमको प्रदुषण नियन्त्रण शुल्कको प्रशासन आन्तरिक राजस्व विभागले निर्धारण गरे बमोजिम हुनेछ ।

१४. टेलिफोन स्वामित्व शुल्क : (१) आर्थिक वर्ष २०७०/०७१ मा टेलिफोन जडान गर्ने ग्राहकबाट टेलिफोन स्वामित्व शुल्क बापत एक हजार रुपैंया असूलउपर गरिनेछ । टेलिफोनको स्वामित्व परिवर्तन भएको अवस्थामा टेलिफोनको स्वामित्व प्राप्त गर्ने व्यक्तिबाट समेत त्यस्तो शुल्क असूलउपर गरिनेछ ।

तर अग्रीम भुक्तानी हुने (प्रि-पेड) मोवाइल टेलिफोनको हकमा प्रत्येक सिमकार्ड र रिचार्ज कार्डको मूल्यमा दुई प्रतिशतका दरले टेलिफोन स्वामित्व शुल्क लाग्नेछ ।

(२) उपदफा (१) बमोजिमको शुल्क दूरसञ्चार सेवा उपलब्ध गराउने निकायले असूल गरी प्रत्येक महिनाको शुल्क अर्को महिनाको पच्चीस गतेभित्र राजस्व खातामा दाखिला गर्नु पर्नेछ । सो अवधिभित्र दाखिला नगरेमा सम्बन्धित निकायबाट वार्षिक पन्ध्र प्रतिशत व्याज सहित असूलउपर गरिनेछ ।

(३) यस दफा बमोजिमको टेलिफोन स्वामित्व शुल्कको प्रशासन आन्तरिक राजस्व विभागले निर्धारण गरे बमोजिम हुनेछ ।

१५. दूरसञ्चार सेवा दस्तुर : (१) आर्थिक वर्ष २०७०/०७१ मा दूरसञ्चार सेवा उपलब्ध गराउने निकायले ग्राहकबाट लिने महसुलको दश प्रतिशत रकम दूरसञ्चार सेवा दस्तुर बापत असूलउपर गरिनेछ । ग्राहकबाट असूलउपर गरिने यस्तो दस्तुर रकम दूरसञ्चार सेवा उपलब्ध गराउने निकायले मूल्य अभिवृद्धि कर सहित दाखिला गर्नु पर्नेछ ।

तर इण्टरनेट टेलिफोन सेवा (भि.ओ.आई.पि.) बाहेकको इण्टरनेट सेवा तथा पेजर सेवा प्रदायकहरूलाई यस्तो दस्तुर लाग्ने छैन ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि दूरसञ्चार सेवा उपलब्ध गराउने अनुमति प्राप्त व्यक्तिहरूबीच एकले अर्कोको नेटवर्क प्रयोग गरे बापत तिर्नुपर्ने शुल्क (इन्टर कनेक्सन चार्ज) मा यस्तो दस्तुर लाग्ने छैन ।

(३) उपदफा (१) बमोजिमको दस्तुर दूरसञ्चार सेवा उपलब्ध गराउने अनुमति प्राप्त व्यक्ति वा निकायले असूल गरी प्रत्येक महिनाको शुल्क अर्को महिनाको पच्चीस गतेभित्र मूल्य अभिवृद्धि कर सहित राजस्व खातामा दाखिला गर्नु पर्नेछ ।

(४) उपदफा (३) बमोजिम दाखिला गर्नु पर्ने दस्तुर म्यादभित्र नबुझाएमा त्यस्तो बाँकी रकममा मासिक पाँच प्रतिशतका दरले थप दस्तुर लाग्नेछ ।

(५) दूरसञ्चार सेवा दस्तुरको प्रशासन आन्तरिक राजस्व विभागले निर्धारण गरे बमोजिम हुनेछ ।

१६. क्यासिनो रोयल्टी : (१) आर्थिक वर्ष २०७०/०७१ मा नेपालमा रहेका क्यासिनो सञ्चालन गर्न इजाजतपत्र प्राप्त प्रत्येक व्यक्ति तथा निकायले प्रत्येक क्यासिनो सञ्चालन गरे बापत वार्षिक चार करोड रुपैंया रोयल्टी तिर्नु पर्नेछ ।

तर, आधुनिक मेशिन वा उपकरणको माध्यमबाट मात्र खेलाइने खेलको लागि वार्षिक तीन करोड रुपैंया रोयल्टी तिर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको रोयल्टी बापतको रकम सम्बन्धित क्यासिनो सञ्चालन गर्न इजाजतपत्र प्राप्त व्यक्ति वा निकायले आर्थिक वर्ष प्रारम्भ भएको मितिले दुई महिनाभित्र संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयमा बुझाउनु पर्नेछ ।

(३) उपदफा (२) बमोजिमको अवधिभित्र रोयल्टी नबुझाउने व्यक्ति वा निकायलाई सो रकम नबुझाए बापत बुझाउन बाँकी

रकमको वार्षिक पन्ध्र प्रतिशतका दरले शुल्क र सो म्याद नाघेको मितिले तीन महिनासम्म वार्षिक पन्ध्र प्रतिशतका दरले थप शुल्क समेत लगाई रोयल्टी रकम असूलउपर गरिनेछ ।

(४) यस दफा बमोजिमको क्यासिनो रोयल्टीको प्रशासन संस्कृति, पर्यटन तथा नागरिक उड्डयन मन्त्रालयवाट हुनेछ ।

(५) क्यासिनो संचालन गर्न इजाजतपत्र प्राप्त व्यक्ति वा निकायले आर्थिक वर्ष २०६९/०७० सम्मको बुझाउनु पर्ने बक्यौता रोयल्टी, शुल्क र थप शुल्क बुझाई सकेको तर इजाजतपत्र नविकरण नभएको भए २०७० असोज मसान्तभित्रमा त्यस्तो इजाजतपत्र नविकरण गरिनेछ ।

(६) क्यासिनो सञ्चालन गर्न इजाजतपत्र प्राप्त व्यक्ति वा निकायले आर्थिक वर्ष २०६९/०७० सम्मको बुझाउनु पर्ने बक्यौता रोयल्टी, शुल्क र थप शुल्क बुझाइ इजाजतपत्र नविकरण गर्न चाहेमा २०७० असोज मसान्तभित्रमा बुझाउन बाँकी सम्पूर्ण रोयल्टी, शुल्क, थप शुल्क एंव बुझाउन बाँकी रोयल्टी रकमको दश प्रतिशत रकम जरिवाना समेत बुझाई इजाजतपत्र नविकरण गर्न चाहेमा त्यस्तो इजाजतपत्र नविकरण गरिनेछ ।

१७. वन पैदावार शुल्क : (१) नेपाल सरकारद्वारा सामुदायिक वनको रुपमा हस्तान्तरण गरिएका राष्ट्रिय वनमध्ये उपभोक्ता समूहले प्रचलित कानून बमोजिम कार्य योजना बनाई निकालिएको साल र खयरका काठ उपभोक्ता समूहबाहिर व्यापारिक प्रयोजनका लागि बिक्री गरेमा त्यसरी बिक्री गरी प्राप्त भएको रकममध्ये पन्ध्र प्रतिशत रकम आर्थिक वर्ष २०७०/०७१ मा वन पैदावार शुल्क बापत नेपाल सरकारको सञ्चित कोषमा जम्मा गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम उपभोक्ता समूहबाहिर व्यापारिक प्रयोजनको लागि काठ बिक्री गरी उपभोक्ता समूहले प्राप्त गरेको रकम सामुदायिक वनको संरक्षण, सम्बर्द्धन, वातावरण संरक्षण र स्थानीय विकाससँग सम्बन्धित कार्यमा खर्च गर्नु पर्नेछ ।

(३) वन पैदावार शुल्क सम्वन्धी कार्यविधि अर्थ मन्त्रालयको सहमतिमा वन तथा भू-संरक्षण मन्त्रालयले निर्धारण गरे बमोजिम हुनेछ ।

(४) यस दफा बमोजिमको वन पैदावार शुल्कको प्रशासन वन तथा भू-संरक्षण मन्त्रालयवाट हुनेछ ।

१८. दर घटाउन, बढाउन वा छुटदिन सक्ने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि नेपाल सरकारले आवश्यकता अनुसार यो अध्यादेश र प्रचलित कानून बमोजिम लगाइएका दस्तुर, शुल्क, महसुल र करको दर घटाउन, बढाउन वा त्यस्तो दस्तुर, शुल्क, महसुल र कर आंशिक वा पूर्ण रुपमा छुट दिन सक्नेछ । त्यस्तो दर घटाइएको, बढाइएको वा छूटको सूचना नेपाल राजपत्रमा प्रकाशन गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम करको दर घटाइएको, बढाइएको वा कुनै दस्तुर शुल्क, महसुल र कर आंशिक वा पूर्ण रुपमा छुट दिईएको विवरण प्रत्येक वर्ष अर्थ मन्त्रालयले व्यवस्थापिका-संसदमा पेश गर्नु पर्नेछ ।

१९. प्रक्रिया सरलीकरण गर्ने तथा बाधा अड्काउ फुकुवा गर्न सक्ने : आयकर ऐन, २०५८, मूल्य अभिवृद्धि कर ऐन, २०५२, अन्तःशुल्क ऐन, २०५८, भन्सार ऐन, २०६४ तथा यस अध्यादेशको कार्यान्वयनको क्रममा हड्ताल, दैवी प्रकोप, प्राकृतिक विपत्तिको कारणले उल्लिखित ऐनले प्रदान गरेको कुनै सुविधा उपभोग गर्न नपाउने अवस्था सिर्जना भएमा वा कुनै जटिलता देखिएमा वा उल्लिखित ऐन तथा यस अध्यादेशको कार्यान्वयनमा कुनै बाधा अड्काउ पर्न गएमा अर्थ मन्त्रालयले आवश्यकता अनुसार अवधि थप गर्न, प्रक्रिया सरलीकरण गर्न वा कार्यान्वयनमा देखिएको बाधा अड्काउ फुकुवा गर्न सक्नेछ ।

२०. खाँडसारी उद्योगलाई दस्तुर तथा जरिवाना मिन्हा सम्बन्धी व्यवस्था : भर्टिकल रोलर तथा होरिजेन्टल रोलर प्रयोग गर्ने (दश हर्ष पावरसम्मको) खाँडसारी उद्योगले आर्थिक वर्ष २०६९/०७० सम्ममा बुझाउनु पर्ने वार्षिक नवीकरण दस्तुर आर्थिक वर्ष २०७०/०७१ का लागि तोकिएको दर बमोजिम बुझाएमा बाँकी विलम्ब शुल्क तथा जरिवाना मिन्हा हुनेछ ।

२१. थप दस्तुर, शुल्क, ब्याज तथा जरिवाना मिन्हा : (१) आर्थिक वर्ष २०६८/०६९ वा सो भन्दा अघि सम्मको आय विवरण पेश नगर्ने वार्षिक २० लाखसम्म कारोवार भएका वा २ लाखसम्म वार्षिक आय भएका कुनै पनि व्यक्तिले आर्थिक वर्ष २०६७/०६८ र २०६८/०६९ को विवरण र सोमा लाग्ने आयकर २०७० साल असोज मसान्तभित्रमा बुझाएमा सोभन्दा अघिका वर्षहरुको आय विवरण पेश

गर्नु पर्ने छैन र सो मा लाग्ने कर, शुल्क तथा ब्याज समेत मिन्हा हुनेछ ।

(२) आर्थिक वर्ष २०६८/०६९ वा सो भन्दा अघिसम्मको मूल्य अभिवृद्धि कर विवरण पेश नगर्ने मूल्य अभिवृद्धि करमा दर्ता भएका कुनै पनि करदाताले आफूले बुझाउनु पर्ने कर विवरण र मूल्य अभिवृद्धि कर २०७० साल पौष मसान्तभित्रमा बुझाएमा सोमा लाग्ने जरिवाना, थप दस्तुर र ब्याज मिन्हा हुनेछ ।

२२. करको दायरामा आउनेलाई शुल्क तथा ब्याज मिन्हा दिईने : (१) चिकित्सक, कलाकार, इन्जिनियर, कानून व्यवसायी, लेखापरीक्षक, व्यापारी, उद्योगी, लगानीकर्ता, परामर्शसेवा प्रदायक, कमिशन एजेण्ट, सेवानिवृत वा वहालवाला वा सार्वजनिक पद धारण गरेका पदाधिकारी, कर्मचारी, शिक्षक, प्राध्यापक लगायत जुनसुकै व्यक्ति वा निकायले आर्थिक वर्ष २०६८/०६९ भन्दा अगाडिका वर्षमा कर लाग्ने आय आर्जन गरेको तर त्यसरी आर्जित आयमा कर दाखिला नगरेको भएमा र आर्थिक वर्ष २०६७/०६८ तथा २०६८/०६९ को आय विवरण र सोमा लाग्ने कर २०७० साल पौष मसान्तसम्म दाखिला गरी स्थायी लेखा नम्बर लिएमा सोभन्दा अघिका वर्षहरुको आय विवरण पेश गर्नु पर्ने छैन र सो मा लाग्ने कर, शुल्क तथा ब्याज समेत मिन्हा हुनेछ ।

(२) उपदफा (१) मा उल्लिखित व्यक्ति तथा निकायले सो उपदफामा तोकिएको अवधिसम्म विवरण सहित कर दाखिला नगरेमा त्यस्ता व्यक्ति तथा निकायले तिर्नु पर्ने कर, शुल्क तथा ब्याज हिसाव गरी असूलउपर गरिनेछ ।

२३. पत्रकार एवं संचार तथा प्रकाशन गृहलाई शुल्क तथा ब्याज मिन्हा दिईने : पत्रकार एवं संचार तथा प्रकाशन गृहले आर्थिक वर्ष २०६८/०६९ को आय विवरण र सो बमोजिम तिर्नु पर्ने कर २०७० साल पौष मसान्तभित्र वुझाई स्थायी लेखा नम्वर लिएमा सो अवधिभन्दा अघिका वर्षहरुको आय विवरण पेश गर्नु पर्ने छैन र सो मा लाग्ने कर, शुल्क तथा ब्याज समेत मिन्हा हुनेछ ।

२४. सहकारी संघ/संस्थालाई लाग्ने आयकर, शुल्क, ब्याज सम्बन्धी विशेष व्यवस्था : (१) सहकारी ऐन, २०४८ बमोजिम दर्ता भई आयकर ऐन, २०५८ को दफा ११ को उपदफा (२) बमोजिम कर नलाग्ने सहकारी संस्था वा संघ बाहेकका सहकारी संस्था वा संघले सम्बन्धित निकायमा पेश गरेको मान्यता प्राप्त लेखा परीक्षकबाट

भएको लेखापरीक्षण प्रतिवेदनको आधारमा आय वर्ष २०६७/०६८ र २०६८/०६९ को आय विवरण र सोमा लाग्ने आयकर २०७० साल पौष मसान्तसम्म दाखिला गरेमा सोभन्दा अघिका वर्षहरुको आय विवरण पेश गर्नु पर्ने छैन र सो मा लाग्ने कर, शुल्क तथा ब्याज समेत मिन्हा हुनेछ ।

(२) सहकारी ऐन, २०४८ बमोजिम दर्ता भई आयकर ऐन, २०५८ को दफा ११ को उपदफा (२) बमोजिम कर नलाग्ने सहकारी संस्था वा संघको हकमा त्यस्ता सहकारी संस्था वा संघहरुले मान्यता प्राप्त लेखापरीक्षकबाट भएको लेखापरीक्षण प्रतिवेदनको आधारमा आर्थिक वर्ष २०६७/०६८ तथा २०६८/०६९ मा स्रोतमा करकट्टी गरी बुझाउनु पर्ने व्याज कर, बहालकर तथा अग्रीम आयकर लगायत कट्टी गर्नुपर्ने अन्य कर रकम २०७० साल पौष मसान्तभित्र बुझाएमा सोमा लाग्ने शुल्क तथा ब्याज मिन्हा हुनेछ ।

(३) उपदफा (१) र (२) मा उल्लिखित सहकारी संस्था वा संघहरुले सो उपदफाहरुमा तोकिएको अवधिसम्म आय विवरण र तिर्नु वुझाउनु पर्ने कर दाखिला नगरेमा त्यस्ता सहकारी संघ संस्थाबाट साविकदेखिको तिर्नु बुझाउनु पर्ने सम्पूर्ण कर, शुल्क तथा व्याज समेत हिसाव गरी असूलउपर गरिनेछ ।

२५. कुखुराको अण्डा राख्ने क्रेटमा कर मिन्हा हुने : कुखुराको अण्डा राख्ने क्रेटमा लागि आएको तर वुझाउन बाँकी मूल्य अभिवृद्धि कर वा क्रेट उत्पादन गर्ने उद्योगले तिर्नु पर्ने गरी यो अध्यादेश प्रारम्भ हुँदाका बखतसम्म आन्तरिक राजस्व कार्यालयबाट कर निर्धारण भएको मूल्य अभिवृद्धि कर र सोमा लागेको जरिवाना, थप दस्तुर र व्याज मिन्हा हुनेछ ।

२६. पूर्वानुमानित कर विवरण पेश गर्ने करदाताको लागि विशेष व्यवस्था : (१) मूल्य अभिवृद्धि करमा दर्ता नभएका र आर्थिक वर्ष २०६८/०६९ सम्ममा बीस लाख रुपैयाँभन्दा कम कारोवार देखाई आयकर तर्फ पूर्वानुमानित कर विवरण वुझाई सकेका करदाताहरुले आर्थिक वर्ष २०६९/०७० सम्मको आफ्नो कारोवार कम घोषणा गरी वास्तविक विक्री अंक फरक परेको भएमा त्यस्ता करदाताहरुले २०७० साल पौष मसान्तसम्म मूल्य अभिवृद्धि करमा दर्ता हुनु पर्ने कारोवार गरेको भएमा दर्ता भई कारोवारको स्वयं घोषणा गरी फरक परेको विक्री अंकको मूल्य अभिवृद्धि कर वापत दुई दशमलव पाँच प्रतिशत र आयकर वापत एक दशमलव पाँच प्रतिशत रकम

वुझाएमा करदाताले घोषणा गरेको हदसम्मको सो कर अन्तिम हुनेछ ।

तर मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम कर छुट हुने बस्तु तथा सेवाको कारोवार गर्ने पूर्वानुमानित कर विवरण बुझाउने करदाताहरुको हकमा भने आयकर वापत एक दशमलव पाँच प्रतिशत रकम वुझाएमा करदाताले घोषणा गरेको हदसम्मको सो कर अन्तिम हुनेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि ग्यॉस तथा चुरोटको कारोवार गर्ने व्यवसायको हकमा फरक परेको बिक्री अंकको मूल्य अभिवृद्धि कर वापत एक प्रतिशत र आयकर वापत शून्य दशमलव पाँच प्रतिशत रकम वुझाएमा करदाताले घोषणा गरेको हदसम्मको सो कर अन्तिम हुनेछ ।

(३) उपदफा (१) वा (२) बमोजिम करदाताले घोषणा गरेको कारोवार छानविन तथा परीक्षण गर्दा परक परेमा त्यस्तो करदाताले यस दफा बमोजिमको सुविधा पाउने छैन ।

२७. इट्टा उत्पादक उद्योगहरुको दर्ता सम्बन्धी विशेष व्यवस्था : (१) मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम दर्ता हुनु पर्ने कर्तव्य भएका तर दर्ता नभई कारोबार गरिरहेका इट्टा उत्पादक उद्योगहरुले २०७० साल असोज मसान्तभित्र मूल्य अभिवृद्धि करमा दर्ता भई कारोवार गरेमा त्यस्ता उद्योगहरुले दर्ता हुनुपूर्व गरेको करयोग्य कारोवारमा मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम लाग्ने कर, थप दस्तुर, ब्याज र जरिवाना मिन्हा हुनेछ ।

(२) मूल्य अभिवृद्धि कर ऐन, २०५२ बमोजिम दर्ता भई कारोवार गर्दै आएका इट्टा उत्पादक उद्योगहरुले तिर्नु पर्ने गरी आर्थिक वर्ष २०६९/०७० सम्म आन्तरिक राजस्व कार्यालयबाट कर निर्धारण भएकोमा कर निर्धारण भएको मूल्य अभिवृद्धि कर २०७० साल असोज मसान्तभित्र दाखिला गरेमा त्यसरी कर निर्धारण गर्दाका बखत लागेको जरिवाना, थप दस्तुर र व्याज तथा कर निर्धारण पश्चात लागेको थप दस्तुर र व्याज समेत मिन्हा हुनेछ ।

(३) उपदफा (१) बमोजिम दर्ता हुने ईंटा उद्योगहरुले आर्थिक वर्ष २०६८।६९ सम्मको बक्यौता अन्तःशुल्क इजाजत दस्तुर २०७० साल असोज मसान्तभित्र वुझाएमा सो मा लाग्ने जरिवाना, विलम्ब दस्तुर तथा ब्याज मिन्हा हुनेछ ।

(४) विगतमा विभिन्न कारणले संचालनमा नरहेका र अन्तःशुल्क इजाजतपत्र नवीकरण नगरेका ईंटा उद्योगहरु प्रचलित कानून बमोजिम २०७० साल असोज मसान्तभित्र अन्तःशुल्क इजाजतपत्र खारेज गरी उद्योग दर्ता खारेजी प्रक्रियामा गएमा लाग्ने ईजाजत दस्तुर, विलम्ब दस्तुर, जरिवाना र ब्याज मिन्हा हुनेछ ।

२८. सामाजिक सुरक्षा कोष व्यवस्था : (१) आयकर ऐन, २०५८ को अनुसूची-१ को दफा १ बमोजिम एकल प्राकृतिक व्यक्तिको वार्षिक दुई लाख रुपैयासम्म रोजगारीको आय भएमा उक्त आयमा एक प्रतिशतका दरले र दम्पत्तीको हकमा वार्षिक दुइलाख पचास हजार रुपैयासम्म रोजगारी आय भएमा एक प्रतिशतका दरले कर लाग्नेछ ।

(२) उपदफा (१) बमोजिमको कर रकम भुक्तानीका बखत स्रोतमा कट्टी गरी असूल गरिनेछ ।

(३) उपदफा (२) बमोजिम असूल गरिएको रकम छुट्टै राजस्व खातामा जम्मा गरिनेछ ।

२९. राजस्व चुहावट (अनुसन्धान तथा नियन्त्रण) ऐन, २०५२ मा संशोधन : राजस्व चुहावट (अनुसन्धान तथा नियन्त्रण) ऐन, २०५२ को,-

(१) दफा २ को, -

(क) खण्ड (क) को सट्टा देहायको खण्ड (क) राखिएको छ :-

"(क) "राजस्व" भन्नाले प्रचलित कानून बमोजिम नेपाल सरकारलाई तिर्नु वा बुझाउनु पर्ने भन्सार महसुल, अन्तःशुल्क, आयकर, मूल्य अभिवृद्धि कर, सवारी साधन कर, घरजग्गा बहाल कर, सम्पत्ति कर, घरजग्गा रजिष्ट्रेशन दस्तुर सम्झनु पर्छ र सो शब्दले प्रचलित कानून बमोजिम लाग्ने अन्य कर तथा गैरकरलाई समेत जनाउँछ ।"

(ख) खण्ड (क) पछि देहायको खण्ड (क१) थपिएको छ :-

"(क१) "गैरकर" भन्नाले सबै प्रकारको प्रशासनिक दस्तुर, सेवा शुल्क, रोयल्टी, लाभांश, साँवा, व्याज लगायत नेपाल सरकारले प्रचलित कानून बमोजिम लगाएको सबै दस्तुर

तथा शुल्क र नेपाल सरकारको पूर्ण वा आंशिक स्वामित्व प्राप्त संस्थान, प्राधिकरण, आयोग, समितिजस्ता निकायले प्रचलित कानून बमोजिम लिने सबै किसिमको शुल्क, दस्तुर समेतको रकम सम्झनु पर्छ ।"

(ग) खण्ड (ङ) पछि देहायको खण्ड (ङ१) थपिएको छ :-

"(ङ१) "मन्त्रालय" भन्नाले अर्थ मन्त्रालय सम्झनु पर्छ ।"

(घ) खण्ड (छ) पछि देहायका खण्ड (छ१), (छ२), र (छ३) थपिएका छन् :-

"(छ१) "बिगो" भन्नाले आयकर, मूल्य अभिवृद्धि कर, अन्तःशुल्क, घर बहाल कर र प्रचलित कानून बमोजिम लाग्ने अन्य कर, शुल्क तथा ब्याज समेतको रकम सम्झनु पर्छ र सो शब्दले भन्सार चोरी पैठारी भएको वा हुन लागेको मालवस्तुको थोक बजार मूल्य वा मालवस्तु फेला नपरी कागज मात्र फेला परेकोमा त्यस्तो मालवस्तु आयात गर्दा भन्सार बिन्दुमा भन्सार प्रयोजनको लागि कायम हुने मूल्य र सो मा लाग्ने भन्सार महसुललाई समेत जनाउँछ ।

(छ२) "ढुवानीका साधन" भन्नाले यात्रुवाहक सवारी साधन वाहेकका मालसामान ओसार पसार गर्ने काममा प्रयोग हुने लरी, ट्रक, मिनी ट्रक, कन्टेनर, वुलेट, ट्याङ्कर, पिकअप, भ्यान, ट्र्याक्टर जस्ता ढुवानीका साधन सम्झनु पर्छ ।

(छ३) "कम्प्यूटर सूचना प्रणाली" भन्नाले विभागले कार्यान्वयनमा ल्याउने कम्प्यूटर सूचना प्रणाली सम्झनु पर्छ

र सो शब्दले वेभमा आधारित अनलाइन ढुवानी साधन अनुगमन प्रणालीलाई समेत जनाउँछ ।”

(२) दफा ४ को, -

(क) खण्ड (च) को सट्टा देहायको खण्ड (च) राखिएको छ :-

"(च) राजस्व बुझाउनु पर्ने कार्यालयको कर्मचारीसँग मिलोमतो गरी वा नगरी नेपाल सरकारलाई प्रचलित कानून बमोजिम तिर्नु बुझाउनु पर्ने राजस्व रकममा हेरफेर वा परिवर्तन गरेमा वा राजस्व बुझाएको देखिने गलत लिखत तथा कागजात पेश गरेमा वा प्राप्त भएमा ।”

(ख) खण्ड (च) पछि देहायको खण्ड (छ) थपिएको छ :-

"(छ) राजस्व बुझाउने प्रयोजनको लागि घोषणा गरिनु पर्ने कुनै आय, घर जग्गा वा अन्य सम्पत्ति वा सामानको मूल्य घटी वा बढी हुने गरी हिसाव वा कागजात तयार गरी पेश गरेमा ।”

(३) दफा ६ को उपदफा (१) पछि देहायको उपदफा (१क.) थपिएको छ :-

"(१क.) दर्ता गरी वा नगरी वा इजाजत लिई वा नलिई गरिने सबै किसिमका आर्थिक कारोबारमा भएको राजस्व चुहावट सम्बन्धी अनुसन्धान, तहकिकात र तत्सम्बन्धी अन्य कारबाही विभागले गर्नेछ ।”

(४) दफा ७ पछि देहायको दफा ७क. थपिएको छ :-

"७क. आकस्मिक जाँच परीक्षण गर्न सक्ने : (१) कसैले राजस्व चुहावट गरेको मानिने कुनै कार्य गरेको छ भन्ने विश्वास लाग्ने मनासिव माफिकको कारण भएमा महानिर्देशक वा निजले खटाएको कुनै कर्मचारीले आकस्मिक रुपमा जुनसुकै व्यक्ति वा यात्रु एवं मालसामान ओसारपसार गर्ने यातायातका साधन, कुनै घर, पसल, गोदाम लगायतका स्थानमा पसी यातायातका साधनलाई रोकी आवश्यक कागजात माग गर्न, तलासी लिन वा कुनै भवन, गोदाम, पसल, कारोबारस्थल, जग्गा र स्थान विशेषमा उपस्थित भई

खानतलासी लिन, सिलबन्दी गर्न, कुनै मालवस्तु वा कागजात नियन्त्रणमा लिन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम कुनै स्थानमा खानतलासी लिँदा वा आकस्मिक जाँच गर्नुपर्दा सम्बन्धित व्यक्तिलाई खानतलासी लिनु वा जाँच गर्नु परेको कारण खुलेको लिखित जनाउ दिनु पर्नेछ ।"

(५) दफा ८ मा देहायको प्रतिबन्धात्मक वाक्यांश थपिएको छ :-

"तर, अनुसन्धान तथा तहकिकातको काम सम्पन्न नभएमा महानिर्देशकले आवश्यकता अनुसार एकै पटक वा पटक पटक गरी बढीमा अर्को तीस दिनसम्म अनुसन्धान तथा तहकिकातको लागि म्याद थप गर्न सक्नेछ ।"

(६) दफा ९ को उपदफा (७) पछि देहायका उपदफा (८) र (९) थपिएका छन् :-

"(८) कुनै कसूर गरी यस ऐन बमोजिम अनुसन्धान तथा तहकिकातको क्रममा रहेको कुनै व्यक्ति कारबाही छल्ने उद्देश्यले विदेश जान सक्ने संभावना रहेको विश्वास हुने पर्याप्त कारण भएमा विभागले निजलाई विदेश जानबाट रोक लगाउन वा यस्तो व्यक्तिको राहदानी कब्जामा लिन, रोक्का गर्न सम्बन्धित निकायलाई लेखी पठाउन सक्नेछ ।

(९) यस ऐन बमोजिमको कसूर गरेको व्यक्तिको सम्बन्धित कार्यालय, संघ-संस्था वा कुनै बैङ्क वा वित्तीय संस्था वा सहकारी संस्थामा रहेको कारोबारको विवरण, धितोपत्र बजारमा भएको आर्थिक कारोबारको विवरण अनुसन्धानको प्रयोजनको लागि विभागले माग गरी लेखी पठाउन सक्नेछ । यसरी माग गरेको विवरण तोकेको म्यादभित्र उपलब्ध गराउनु सम्बन्धित कार्यालय, संस्था वा व्यक्तिको कर्तव्य हुनेछ ।"

(७) दफा १० को,-

(क) उपदफा (१) मा रहेका "विभागको कुनै कर्मचारीलाई" भन्ने शब्दहरुको सट्टा "विभाग वा मातहत कार्यालयको कुनै अधिकृत कर्मचारीलाई" भन्ने शव्दहरु राखिएका छन् ।

(ख) उपदफा (२) पछि देहायको उपदफा (३) थपिएको छ :-

"(३) यस ऐन बमोजिम कारवाही शुरु गरिएको कसूरको अनुसन्धान गर्दै जाँदा प्रचलित अन्य कानून बमोजिमको कसूर देखिएमा सोही कानून बमोजिम कारवाही

अगाडि वढाउन सम्बन्धित निकाय वा अख्तियार प्राप्त अधिकारीलाई विभागले लेखी पठाउन सक्नेछ । ”

(८) दफा ११ को उपदफा (१) को खण्ड (च) पछि देहायको खण्ड (छ) थपिएको छ :-

“(छ) राजस्व चुहावटको कसूर गर्ने व्यक्ति वा संस्थाको चल अचल सम्पत्ति रोक्का गर्नु पर्ने मनासिव कारण भएमा अनुसन्धान अधिकृतले त्यस्तो सम्पत्ति रोक्का गर्नेछ ।”

(९) दफा १३ पछि देहायका दफा १३क., १३ख. र १३ग. थपिएका छन् :-

“१३क. सम्बन्धित निकायलाई लेखी पठाउन सक्ने : (१) राजस्व चुहावटको सम्बन्धमा अनुसन्धान अधिकृतले अनुसन्धान गर्दा प्रचलित कानून बमोजिम निर्धारण गर्नुपर्ने आयकर, मूल्य अभिवृद्धि कर, अन्तःशुल्क, भन्सार महसुल वा गैरकर निर्धारण गर्दा लापरबाही वा हेलचेक्र्याइँ वा अन्य कुनै कारणबाट त्रुटी हुन गएको पाएमा अनुसन्धान अधिकृतले सो कुरा उल्लेख गरी विभाग समक्ष प्रतिवेदन पेश गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम अनुसन्धान अधिकृतको प्रतिवेदन पेश हुन आएपछि विभागले त्यस्तो कर, अन्तःशुल्क, भन्सार महसुल वा गैरकरको निर्धारणमा भएको त्रुटी सच्याउन सम्बन्धित निकायलाई लेखी पठाउनेछ ।

(३) उपदफा (२) बमोजिम त्रुटी सच्याउनको लागि लेखी आएमा सो बमोजिम त्रुटी सच्याउने कर्तव्य सम्बन्धित निकायको हुनेछ ।

१३ख. कम्प्युटरबाट प्रशोधित अभिलेख प्रमाणको रुपमा लिन सक्ने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि यस ऐनको प्रयोजनका लागि अन्यथा प्रमाणित भएकोमा बाहेक विद्युतीय माध्यमबाट प्रशोधित वा विकास गरिएका विभागले तोकेको अभिलेखलाई प्रमाणको रुपमा लिन सकिनेछ ।

(२) उपदफा (१) बमोजिमको अभिलेखको विवरण तथा तथ्याङ्क प्राप्त गर्ने, विश्लेषण गर्ने वा प्रशोधन गर्ने सम्बन्धी अन्य व्यवस्था तोकिए बमोजिम हुनेछ ।

१३ग. वेभमा आधारित अनलाइन ढुवानी साधन अनुगमन प्रणाली लागू गर्ने : (१) प्रचलित कानून बमोजिम दर्ता भएको ढुवानीको साधन प्रयोगकर्ताले एक जिल्लाबाट अर्को जिल्लामा मालसामान ओसारपसार गर्नु पूर्व ढुवानी गरिने मालसामानको वेभमा आधारित विभागको केन्द्रीय सूचना प्रणालीमार्फत घोषणा गर्नुपर्नेछ र त्यस्ता ढुवानी गरिने मालसामानसँग सम्बन्धित जानकारीहरु २०७० साल पौष मसान्तभित्र सो प्रणालीमा प्रविष्टी गरेर मात्र ओसारपसार गर्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमका ढुवानीको साधन प्रयोगकर्ताले मालसामान घोषणाको मुद्रण प्रति र विभागबाट तोकिएका कागजात समेत साथमा राख्नु पर्नेछ ।

(३) नेपाल भित्र दर्ता भएको वा नयाँ दर्ता हुने ढुवानीको साधन धनीले विभागले तोकेको मापदण्ड अनुसारको भू-अवस्थिति देखाउने चालु हालतको यन्त्र (जिपिएस डिभाइस) को सिलसिलेवार नम्बर विभागमा दर्ता गरी २०७० साल पौष मसान्तभित्र अनिवार्यरुपमा आफ्नो ढुवानीको साधनमा जडान गरी राख्नु पर्नेछ ।

(४) उपदफा (३) मा जुनसुकै कुरा लेखिएको भएतापनि कुनै किसिमको ढुवानीको साधनमा वा कुनै स्थानमा चल्ने साधनमा जीपीएस डिभाइस अनिवार्य रुपमा जडान गर्नु नपर्ने गरी विभागले तोक्न सक्नेछ ।"

(१०) दफा २० को सट्टा देहायको दफा २० राखिएको छ :-

"२०. मुद्दा दायर गर्नुपर्ने अवधि : (१) यस ऐन बमोजिमको कसूरको अनुसन्धान तहकिकात समाप्त भई मुद्दा दायर गर्न सरकारी वकिलको राय माग भएकोमा सम्बन्धित सरकारी वकिलले १५ दिनभित्र सो सम्बन्धमा राय उपलब्ध गराउनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम सरकारी वकिलले राय उपलब्ध गराएको मितिले २० दिनभित्र मुद्दा दायर गर्नुपर्नेछ ।"

(११) दफा २३ को सट्टा देहायको दफा २३ राखिएको छ :-

"२३. दण्ड सजाय : (१) राजस्व चुहावटको कसूर गर्ने व्यक्तिलाई देहाय बमोजिमको सजाय हुनेछ :-

(क) मालवस्तु कब्जामा लिईएकोमा त्यस्तो मालवस्तु जफत गरी बिगोको दोब्बरसम्म जरिबाना वा कसूरको मात्रा हेरी तीन वर्षसम्म कैद वा दुवै सजाय,

(ख) मालवस्तु कब्जामा नभई कारोबारको अभिलेख मात्रको आधारमा अपराध प्रमाणित भएमा सो कारोबारमा प्रचलित कानून बमोजिम बुझाउनु पर्ने राजस्व रकम र बिगोको दोब्बरसम्म जरिबाना वा कसूरको मात्रा हेरी तीन वर्षसम्म कैद वा दुवै सजाय ।

(२) राजस्व चुहावटको कसूरमा मतियारलाई मुख्य अभियुक्तलाई हुने सजायको आधा सजाय हुनेछ ।

(३) उपदफा (१) को खण्ड (ख) बमोजिम बुझाउनु पर्ने राजस्व रकममा राजस्व सम्बन्धी प्रचलित कानूनमा उल्लेख भए बमोजिमको ब्याज समेत लाग्नेछ ।

(४) दफा १३ग. को उपदफा (१) वा (२) वा (३) मा उल्लिखित व्यवस्थाको विपरित कार्य गरेमा सम्बन्धित ढुवानी साधनको धनी वा सोको प्रयोगकर्तालाई अनुसन्धान अधिकृतले प्रथम पटकको लागि दुई हजार रुपैंया र त्यसपछि पटकै पिच्छे पाँच हजार रुपैंया जरिवाना गर्नेछ ।"

(१२) दफा २६ को सट्टा देहायको दफा २६ राखिएको छ :-

"२६. विशेषज्ञ वा कर्मचारीलाई काममा लगाउन सकिने : यस ऐन अन्तर्गतको अनुसन्धान तथा तहकिकात सम्बन्धी काम कारबाहीको सम्बन्धमा विभागले विशेषज्ञको राय लिन वा कुनै विशेषज्ञ वा अन्य कर्मचारीलाई काजमा लिई वा करारमा राखी काममा लगाउन सक्नेछ ।"

(१३) दफा २९ को सट्टा देहायको दफा २९ राखिएको छ :-

"२९. पुरस्कार दिइने : (१) यस ऐन अन्तर्गतको कसूर गरेको सूचना दिने सुराकीलाई यस ऐन अन्तर्गत दायर गरिएको मुद्दाको अन्तिम किनारा लागेपछि असूल भएको विगो रकमको पन्ध्र प्रतिशत वा पन्ध्र लाख

रुपैंयामध्ये जुन घटी हुन्छ सो बराबरको रकम पुरस्कार स्वरुप दिइनेछ ।

(२) यस ऐन बमोजिम विभागले गरेको अनुसन्धानबाट कसैले आफूले तिर्नु बुझाउनु पर्ने राजस्वको सम्पूर्ण वा केही अंश छलेको यकीन भएमा असूल हुन आएको विगो रकमको पाँच प्रतिशत वा पाँच लाख रुपैंयामध्ये जुन घटी हुन्छ सो बराबरको रकम अनुसन्धानमा संलग्न कर्मचारीलाई पुरस्कार स्वरुप दिइनेछ ।

(३) पुरस्कार पाउने व्यक्ति एकभन्दा बढी भएमा पुरस्कारको रकम दामासाहीले दिइनेछ ।”

(१४) दफा ३० पछि देहायको दफा ३०क. थपिएको छ :-

“३०क. सुराकी खर्च दिइने : (१) राजस्व चुहावटको सूचना दिने व्यक्तिलाई सूचनाको सत्यताको आधारमा विभागद्वारा तोकिएको कार्यविधि बमोजिम तत्काल बढीमा दशहजार रुपैयासम्म सुराकी खर्च दिइनेछ ।

(२) उपदफा (१) बमोजिम सुराकी खर्च दिइएको सुराकीको नाम, थर र वतन गोप्य राखिनेछ ।

(१५) दफा ३२ पछि देहायका दफा ३२क. र ३२ख. थपिएका छन् :-

“३२क. कालो सूचीमा राख्ने : (१) यस ऐन बमोजिम राजस्व असूलीको लागि अनुसन्धान तथा तहकिकात भई कसूरदार ठहरिएको व्यक्ति वा निकायलाई विभागले तोकिएको प्रक्रिया पुरा गरी कालो सूचीमा राख्न लेखी पठाउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम लेखी आएमा सम्बन्धित निकायले त्यस्तो व्यक्ति वा निकायलाई प्रचलित कानून बमोजिम कालो सूचीमा राख्नु पर्नेछ ।

३२ख. असूलउपर गर्ने : यस ऐन बमोजिम सरकारलाई बुझाउनु पर्ने राजस्व असूलीको लागि अनुसन्धान तथा तहकिकात भएको व्यक्ति तथा निकायलाई अनुसन्धान अधिकृतले तोकिएको प्रक्रिया पुरा गरी निजको चल अचल सम्पत्ति उपर दावी गर्न, दावी गरेको सम्पति रोक्का राख्न, लिलाम विक्री गर्न तथा नेपाल वाहिर जान रोक लगाई असूलउपरको लागि दावी गर्न सक्नेछ ।”

(१६) दफा ३७ पछि देहायको दफा ३७क. थपिएको छ :-

"३७क. राजस्व प्रहरीको रुपमा खटाउन सक्ने : (१) दफा ३७ मा उल्लेख भए बमोजिम राजस्व प्रहरीको छुट्टै व्यवस्था नभएसम्मका लागि नेपाल सरकारले विभाग अन्तर्गत रहने गरी आवश्यकता अनुसार सशस्त्र प्रहरी बलका अधिकृत एवं जवानलाई आवश्यक संख्यामा संलग्न गरी राजस्व प्रहरीको रुपमा काम गर्न खटाउन सक्नेछ ।

(२) उपदफा (१) बमोजिम खटिएको राजस्व प्रहरीले महानिर्देशकको प्रत्यक्ष मातहत र नियन्त्रणमा रही काम गर्नु पर्नेछ ।

(३) कसैले राजस्व चुहावट गरेको वा गर्न लागेको मनासिव माफिकको कारण भएमा महानिर्देशक वा सम्बन्धित अनुसन्धान अधिकृतको आदेशले उपदफा (१) बमोजिम खटिएको राजस्व प्रहरीले त्यस्तो व्यक्तिलाई रोक्न सक्नेछ ।

(४) उपदफा (३) बमोजिम रोक्न खोज्दा निजले हुलहुज्जत वा जोरजुलुम गरेमा त्यसरी खटिएको राजस्व प्रहरीले निजलाई त्यसो नगर्न सम्झाउनु बुझाउनु पर्नेछ ।

(५) उपदफा (४) बमोजिम सम्झाउँदा बुझाउँदा पनि निजले हुलहुज्जत वा जोरजुलुम गरेमा उपदफा (१) बमोजिम खटिएको राजस्व प्रहरीले निजलाई पक्राउ गर्न सक्नेछ ।

(६) उपदफा (५) बमोजिम पक्राउ गर्न खोज्दा निजले जोरजुलुम गरेमा वा भाग्न उम्कन खोजेमा र तत्काल पक्राउ गर्न नसकिने अवस्था भएमा आफ्नो रक्षा र कर्तव्यको पालनाको निम्ति महानिर्देशक वा सम्बन्धित अनुसन्धान अधिकृतको आदेशले घटनास्थलमा खटिएका राजस्व प्रहरीले त्यस्तो घटना रोक्न पहिले हवाई फायर गर्न र त्यसो गर्दा पनि स्थिति नियन्त्रण नभए वा हुलहुज्जत गर्ने व्यक्तिसँग समेत हतियार भएमा कम क्षति हुने गरी गोली समेत चलाउन सक्नेछ ।

(७) कुनै ढुवानी वा सवारी साधनबाट राजस्व छलिएको मालवस्तु ढुवानी गर्दै गरेको मनासिव

माफिकको शंका भएमा उपदफा (१) बमोजिम खटिएका राजस्व प्रहरीले त्यस्तो सवारी साधन समेत रोक्न वा रोक्न लगाउन आदेश दिन सक्नेछ । त्यस्तो आदेश नमानी हुलहुज्जत वा जोरजुलुम गरी त्यस्तो सवारी साधन नजँचाई भगाउने प्रयत्न गरेमा वा भगाएमा महानिर्देशक वा सम्बन्धित अनुसन्धान अधिकृतको आदेश लिई खटिएको राजस्व प्रहरीले त्यस्तो सवारी साधनको पाङ्ग्रामा कम क्षति हुने गरी गोली चलाउन सक्नेछ ।

(८) उपदफा (६) वा (७) बमोजिम गोली चलाउनु परेको अवस्थामा सो कुराको जानकारी छिटो साधनद्वारा अनुसन्धान अधिकृतले आदेश दिएकोमा महानिर्देशक र सम्बन्धित जिल्लाको प्रमुख जिल्ला अधिकारीलाई र महानिर्देशकले आदेश दिएकोमा सम्बन्धित जिल्लाको प्रमुख जिल्ला अधिकारीलाई र अर्थ मन्त्रालयको सचिवलाई दिनु पर्नेछ ।"

३०. मूल्य अभिवृद्धि कर ऐन, २०५२ मा संशोधन : मूल्य अभिवृद्धि कर ऐन, २०५२ को,-

(१) दफा २ को,-

(क) खण्ड (च) पछि देहायको खण्ड (च१) थपिएको छ :-

"(च१) "कम्पनी वा निकायको समूह" भन्नाले देहायको अवस्था विद्यमान भएको कम्पनी वा निकायको समूह सम्झनु पर्छ :-

(१) निकायको समूहमा सम्बद्ध व्यक्ति वा प्रतिनिधि सदस्यद्वारा कुनै व्यवसाय सञ्चालन गरेमा,

(२) कुनै वस्तु वा सेवाको आपूर्ति निकायको समूहद्वारा आफ्नो सम्बद्ध कुनै निकाय वा अर्को निकायको समूहलाई आपूर्ति गरेमा,

(३) निकायको समूह वा समूहको सदस्यलाई कुनै वस्तु वा सेवाको आपूर्ति गरेमा,

(४) कुनै दुई वा दुईभन्दा बढी निकायहरूको व्यापार सञ्चालनको स्थायी ठेगाना एकै ठाउँमा भएमा, वा

(५) कुनै एक व्यक्ति वा केही व्यक्तिको प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा निकायको समूहमा नियन्त्रण भएमा ।"

(ख) खण्ड (ज) को सट्टा देहायको खण्ड (ज) राखिएको छ :-

"(ज) "प्रतिफल" भन्नाले वस्तु वा सेवाको आपूर्ति गर्दा सोको मूल्य बापत प्राप्त हुने कुनै पनि कुरा सम्झनु पर्छ ।"

(ग) खण्ड (ज) पछि देहायको खण्ड (ज१) थपिएको छ :-

"(ज१) "ऋण सम्झौता" भन्नाले हायर पर्चेज सम्झौता वा वित्तीय पट्टा सम्झनु पर्छ ।"

(घ) खण्ड (ट) पछि देहायको खण्ड (ट१) थपिएको छ :-

"(ट१) "विद्युतीय माध्यम" भन्नाले कम्प्यूटर, इन्टरनेट, इ-मेल, फ्याक्स, विद्युतीय क्यास मेशिन (इलेक्ट्रोनिक क्यास रजिष्टर), फिस्कल प्रिन्टर समेतका स्वीकृत माध्यम सम्झनु पर्छ ।"

(ङ) खण्ड (न) को सट्टा देहायको खण्ड (न) राखिएको छ :-

"(न) "कर अधिकृत" भन्नाले यस ऐनको प्रयोजनको लागि नेपाल सरकारले नियुक्त गरेको कर अधिकृत, प्रमुख कर अधिकृत र प्रमुख कर प्रशासक सम्झनु पर्छ र सो शब्दले विभागका शाखा अधिकृत, निर्देशक र उप-महानिर्देशक वा यस ऐन बमोजिम कर अधिकृतको अधिकार प्रयोग गर्न पाउने गरी नेपाल सरकारले तोकेको अन्य कुनै अधिकृतलाई समेत जनाउँछ ।"

(२) दफा ४ को सट्टा देहायको दफा ४ राखिएको छ :-

"४. कर अधिकृतको अधिकार क्षेत्र : (१) कर अधिकृतको अधिकार क्षेत्र नेपाल सरकारले तोके बमोजिम हुनेछ ।

(२) कर अधिकृतलाई आफ्नो कार्यक्षेत्र बाहेकका अन्य क्षेत्रका करदाताको कारोबार समेत निरीक्षण र अनुगमन गर्ने गरी महानिर्देशकले तोक्न सक्नेछ ।"

(३) दफा ५क. को सट्टा देहायको दफा ५क. राखिएको छ :-

"५क.कारोबारको स्वामित्वको हस्तान्तरणमा कर नलाग्ने : (१) यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि दर्ता भएको व्यक्तिले आफूले गर्दै आएको कारोबार अन्य कुनै दर्ता भएको व्यक्तिलाई बिक्री गरेमा वा निजको मृत्यु भई हकवालाको नाममा कारोबार हस्तान्तरण भएमा त्यसरी हुने स्वामित्वको हस्तान्तरणमा कर लाग्ने छैन । त्यसरी कारोबार बिक्री गर्दा वा हस्तान्तरण गर्दा दर्ता भएको व्यक्तिले सो कुराको जानकारी तोकिए बमोजिम विभागलाई दिनु पर्नेछ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि कानून बमोजिम दर्ता हुनुपर्ने वा भएको कुनै उद्योग वा व्यवसायको हस्तान्तरण भएमा स्वामित्व प्राप्त गर्नेले हस्तान्तरण गर्नेको कानूनद्वारा निर्दिष्ट करको दायित्व व्यहोर्नु पर्नेछ ।

(३) उपदफा (२) को अधीनमा रही स्वामित्व प्राप्त गर्नेले यस ऐन बमोजिम तोकिएको अवधिसम्म (हस्तान्तरण हुन अघि र पछिसम्मको) त्यस्तो उद्योग वा व्यवसायको कारोबारको लेखा, खातावही तथा हिसाव किताब सुरक्षित राख्नुपर्ने दायित्व वहन गर्नु पर्नेछ ।"

(४) दफा ५ख. को प्रतिवन्धात्मक वाक्यांशको सट्टा देहायको प्रतिवन्धात्मक वाक्यांश राखिएको छ :-

"तर दफा ९ बमोजिम तोकिएको रकमसम्मको मात्र कारोवार गरेको हुँदा दर्ता हुनु नपर्ने भन्ने जिकीर लिने व्यक्तिले दर्ता गर्ने आदेश प्राप्त भएको मितिले ३० दिनभित्र सो कुराको प्रमाण पुर्‍याउनु पर्नेछ ।"

(५) दफा ७ को उपदफा (१) को सट्टा देहायको उपदफा (१) राखिएको छ :-

"(१) यस ऐन बमोजिम लाग्ने करको दर तेह्र प्रतिशतको एकल दर हुनेछ ।"

(६)	दफा ८ को,-

(क) उपदफा (२) को सट्टा देहायको उपदफा (२) राखिएको छ :-

"(२) नेपाल वाहिरको दर्ता नभएको कुनै व्यक्तिबाट सेवा प्राप्त गर्ने दर्ता भएको वा दर्ता नभएको व्यक्तिले यो ऐन र यो ऐन अर्न्तगत बनेको नियम बमोजिम कर लाग्ने मूल्यमा भुक्तानीका वखत कर निर्धारण र असूलउपर गर्नु पर्नेछ ।"

(ख) उपदफा (२) पछि देहायको उपदफा (३) थपिएको छ :-

"(३) व्यावसायिक प्रयोजनको लागि निर्माण गरिने पचास लाख रुपैंयाभन्दा बढीको भवन वा अपार्टमेन्ट वा सपिङ कम्प्लेक्स वा विभागले तोकेका यस्तै प्रकारका अन्य संरचना दर्ता नभएको व्यक्तिबाट निर्माण गराएको भए तापनि त्यस्तो निर्माण दर्ता भएको व्यक्तिबाट गराए सरह मानी कर दाखिला गर्नु पर्नेछ । त्यसरी दाखिला नगरेमा सो संरचनाको स्वामित्व रहेका व्यक्तिबाट कर निर्धारण गरी असूलउपर गरिनेछ ।"

(७)	दफा ८ पछि देहायको दफा ८क. थपिएको छ :-

"८क. बैङ्क प्रत्याभूतिको व्यवस्था : (१) उद्योग सञ्चालन भएको अन्तिम विगत बाह्र महिनाको कुल बिक्रीको साठी प्रतिशतभन्दा बढी निकासी गर्ने उद्योगले निकासी गर्ने परिमाण जतिको मालवस्तु उत्पादन गर्न आवश्यक कच्चा पदार्थ पैठारी गर्दा तथा बण्डेड वेयर हाउस मार्फत करमुक्त पसलको लागि पैठारी गर्ने मालसामानमा लाग्ने कर बापत सम्बन्धित भन्सार कार्यालयमा बैङ्क प्रत्याभूति राखी पैठारी गर्न सक्नेछ ।

तर बण्डेड वेयर हाउस मार्फत कर मुक्त पसलले पैठारी गर्ने बाहेक अन्य निकासीकर्ताले यस्तो सुविधा प्राप्त गर्न कच्चा पदार्थबाट तयारी सामान बनाई निकासी गर्दा दश प्रतिशत मूल्य अभिवृद्धि भएको हुनु पर्नेछ ।

(२) उपदफा (१) बमोजिमको सुविधा लिई बण्डेड वेयर हाउस मार्फत पैठारी भएका मदिरा

तथा चुरोट नेपाल सरकार, परराष्ट्र मन्त्रालयले सिफारिस गरेको कूटनैतिक तथा महसुल सुविधा प्राप्त व्यक्ति वा निकायलाई मात्र बिक्री गर्नु पर्नेछ ।

(३) यो दफा प्रारम्भ हुँदाका वखत त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलस्थित करमुक्त पसलमा मौज्दातमा रहेका मदिरा तथा चुरोट स्वीकृति प्राप्त आफ्नै बण्डेड वेयर हाउसमा स्थानान्तरण गर्न वा लाग्ने कर तिरी बिक्री गर्न सकिनेछ ।

(४) उपदफा (१) बमोजिम राखिएको बैङ्क प्रत्याभूति विभागले तोकेको प्रक्रिया बमोजिम सम्बन्धित भन्सार कार्यालयबाट फुकुवा गरिनेछ ।

(५) यस दफा बमोजिमको सुविधा प्राप्त गर्ने व्यक्तिले दफा २४ को उपदफा (४) बमोजिमको सुविधा पाउने छैन ।"

(८) दफा ९ को सट्टा देहायको दफा ९ राखिएको छ :-

"९. सानो कारोबार गर्ने व्यवसायीलाई छूट : यस ऐनमा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि तोकिएको रकमसम्मको वार्षिक कर लाग्ने कारोबार गर्ने साना व्यवसायीलाई दर्ता गर्नु नपर्ने र विवरण पेश गर्नु नपर्ने तथा अन्य प्रक्रियाहरू पूरा गर्नु नपर्ने गरी तोकिए बमोजिम छूट दिन सकिनेछ ।

तर सानो कारोबार गर्ने व्यवसायीले स्वेच्छाले आफ्नो कारोबार दर्ता गर्न चाहेमा दफा १० बमोजिमको प्रक्रिया पूरा गरी दर्ता गराउन सक्नेछ ।"

(९) दफा १० को,-

(क) उपदफा (१) र (२) को सट्टा देहायका उपदफा (१) र (२) राखिएका छन् :-

"(१) कुनै कारोबारमा संलग्न हुन चाहने व्यक्तिले कारोबार शुरु गर्नुभन्दा अघि कारोबार दर्ताको लागि तोकिएको ढाँचामा कर अधिकृत समक्ष दरखास्त दिनु पर्नेछ ।

(२) कुनै व्यक्तिले कारोबार गरेको वस्तुमा कर लाग्ने भएमा वा ईटा उत्पादन गरी कारोवार

गरेमा वा कुनै व्यक्तिले महानगरपालिका, उपमहानगरपालिका, नगरपालिका वा विभागले तोकेको क्षेत्रभित्र हार्डवेयर, सेनिटरी, फर्निचर, फिक्स्चर, फर्निसिङ्ग, अटोमोवाइल्स, मोटर पार्ट्स, इलेक्ट्रोनिक्स, मार्बल, शैक्षिक परामर्श, डिस्को थेक, हेल्थ क्लब, क्याटरिङ्ग सेवा, पार्टी प्यालेस व्यवसाय, पार्किङ सेवा, मेशिनरी उपकरण प्रयोग भएको ड्राईक्लिनर्स, बार सहितको रेष्टुरेण्ट र कलरल्याबको कारोबार सञ्चालन गरेमा त्यसरी कर लागेको वा कारोबार सञ्चालन गरेको मितिले तीस दिनभित्र त्यस्तो कारोबार दर्ताको लागि तोकिएको ढाँचामा कर अधिकृत समक्ष दरखास्त दिनु पर्नेछ ।"

(ख) उपदफा (४) मा रहेको "निवेदन" भन्ने शब्दको सट्टा "दरखास्त" भन्ने शब्द राखिएको छ ।

(१०) दफा १० पछि देहायको दफा १०क. थपिएको छ :-

"१०क. अस्थायी दर्ता सम्बन्धी विशेष व्यवस्था : (१) अस्थायी रुपमा आयोजना गर्ने प्रदर्शनी, मेला तथा अन्य यस्तै कारोबारको हकमा कारोबार शुरु हुनुभन्दा अगावै आयोजक तथा सो आयोजनामा कर लाग्ने वस्तु वा सेवाको कारोबार गर्ने मूल्य अभिवृद्धि करमा दर्ता नभएका व्यवसायी मूल्य अभिवृद्धि करमा अस्थायी रुपमा दर्ता हुनु पर्नेछ । यसरी दर्ता हुनेको हकमा कर अधिकृतले सुरक्षण बापत धरौटी माग्नु पर्नेछ ।

(२) उपदफा (१) बमोजिम साविकदेखि मूल्य अभिवृद्धि करमा दर्ता भएको व्यवसायीले सो कार्यक्रममा राख्ने वस्तु स्टक ट्रान्सफर गरी लैजान पाउनेछ ।

(३) उपदफा (१) बमोजिमको कार्यक्रमको लागि मात्र दर्ता भएको करदाताले आयोजना गरेको प्रदर्शनी, मेला समाप्त भएको सात दिनभित्र कारोबारको विवरण पेश गरी लाग्ने सम्पूर्ण कर समेत दाखिला गरी अस्थायी दर्ता खारेज गर्नु पर्नेछ ।"

(११) दफा ११ को,-

(क) उपदफा (१) को,-

(१) खण्ड (ग) को सट्टा देहायको खण्ड (ग) राखिएको छ :-

"(ग) साझेदार संस्था भए त्यस्तो साझेदारी संस्था विघटन भएमा वा साझेदारको मृत्यु भएमा"

(२) खण्ड (घ) पछि देहायको खण्ड (घ१) थपिएको छ :-

"(घ१) लगातार एक वर्षसम्म शून्य विवरण दिने वा विवरण नै नदिई बसेका करदाता भएमा,"

(३) उपदफा (१क) पछि देहायको उपदफा (१ख) थपिएको छ :-

"(१ख) दर्ता खारेजीको लागि कर विवरण पेश भएको पन्ध्र दिनभित्र करदाताले लेखा परीक्षणको लागि आफ्नो कागजातहरू पेश गर्नु पर्नेछ र कर अधिकृतले त्यस्ता करदाताको लेखा परीक्षण गरी तीन महिनाभित्र दर्ता खारेज गरी वा दर्ता खारेज नहुने भए सोको जानकारी करदातालाई दिनु पर्नेछ । सो अवधिभित्र कर अधिकृतले दर्ता खारेज नगरेमा वा दर्ता खारेज हुने भनी निर्णय नगरेमा सो अवधिपछिको कर विवरण करदाताले पेश गर्नु पर्ने छैन ।"

(ख) उपदफा (३) को सट्टा देहायको उपदफा (३) राखिएको छ :-

"(३) पहिले कर कट्टी सुविधा लिई सकेका वस्तुहरूमध्ये दर्ता खारेज हुँदाका बखत बाँकी रहेको मौज्दात (पूँजीगत सामान समेत) लाई बजार मूल्यमा आपूर्ति गरेको मानिनेछ र सो बमोजिम कर निर्धारण गरी असूल गरिनेछ ।

स्पष्टीकरण : यस उपदफाको प्रयोजनको लागि "पूँजीगत सामान" भन्नाले कुनै सम्पत्ति वा सम्पत्तिको कुनै भाग र कर लाग्ने कारोबारमा प्रयोग हुने सम्पत्तिलाई सम्झनु पर्छ ।"

(ग) उपदफा (३) पछि देहायको उपदफा (४) थपिएको छ :-

"(४) कर लाग्ने वस्तु वा सेवाको कारोबार हुँदा कुनै कुरा गरेको वा नगरेको कारणले यस ऐन बमोजिम गर्नु पर्ने कार्य तथा दायित्व बाँकी भएमा सो करदाताको दर्ता खारेज हुँदैमा त्यस्तो दायित्वको असरबाट त्यस्तो करदाताले उन्मुक्ति पाउने छैन ।"

(१२) दफा १२ को उपदफा (२) को खण्ड (ख) को सट्टा देहायको खण्ड (ख) राखिएको छ :-

"(ख) यस ऐन बमोजिमको कर बाहेक अन्तःशुल्क, स्वामित्व शुल्क र अन्य कर रकम ।"

स्पष्टीकरण :- यस खण्डको प्रयोजनको लागि "अन्य कर रकम" भन्नाले साल-वसाली आर्थिक ऐनले तोके बमोजिम लाग्ने महसुल, दस्तुर वा अन्य शुल्क सम्झनु पर्छ ।"

(१३) दफा १२ पछि देहायको दफा १२क. थपिएको छ :-

"१२क. काठको कारोबारमा कर लाग्ने मूल्य : (१) राष्ट्रिय वनको काठ लिलामी, छोडपूर्जी वा चिरान आदेश पाएको समयमध्ये जुन पहिले हुन्छ सो समयमा त्यस्तो काठको रोयल्टी रकम वा लिलाम रकममा जुन बढी हुन्छ सो रकममा कर लगाई असूलउपर गरिनेछ ।

(२) निजी आवादी, निजी वन वा सामुदायिक वनको काठ व्यापारिक प्रयोजनको लागि बिक्री गरेमा रोयल्टी नलाग्ने भए पनि उपदफा (१) मा व्यवस्था भए बमोजिम राष्ट्रिय वनको काठ सरह नै कर लाग्नेछ ।"

(१४) दफा १४ को,-

(क) उपदफा (१) मा देहायको प्रतिबन्धात्मक वाक्यांश थपिएको छ :-

"तर दश लाख रुपैंयाभन्दा बढीको वार्षिक कारोबार गर्ने व्यक्तिले दर्ता नभएको भए पनि आफ्नो नाम, ठेगाना तथा स्थायी लेखा नम्बर उल्लेख गरी सिलसिलेवार नम्बर सहितको बिजक दिनु पर्नेछ ।"

(ख) उपदफा (३) पछि देहायका उपदफा (४), (५), (६) र (७) थपिएका छन् :-

"(४) दश हजार रुपैंयाभन्दा बढीको कर लाग्ने वस्तु विभागले तोकेको क्षेत्रबाहिर ढुवानी गर्नेले कर बिजक साथमा राख्नु पर्नेछ ।

(५) विभागले करदातालाई क्यास मेसिन वा कम्प्युटरको प्रयोग गरी बिजक दिनु पर्ने गरी आदेश दिन सक्नेछ । यसरी क्यास मेसिन वा कम्प्युटरको प्रयोग गरी बिजक दिने सम्बन्धी अन्य प्रक्रिया विभागले तोके बमोजिम हुनेछ ।

(६) विभागले सूचना प्रकाशन गरी वा लिखित आदेश दिई तोकेको कुनै व्यक्तिले कुनै तोकेको वस्तुको सोही सूचना वा आदेशमा तोकेको समयावधिका लागि त्यस्तो वस्तुको खुद्रा बिक्री मूल्य सार्वजनिक गर्नु पर्ने गरी तोक्न सक्नेछ । यस्तो सूचना वा आदेश प्राप्त भएपछि खुद्रा बिक्री मूल्य सार्वजनिक नगरी कुनै वस्तुको बिक्री वा हस्तान्तरण गर्न पाउने छैन ।

(७) उपदफा (६) बमोजिम तोकिएको व्यक्तिले त्यस्तो वस्तु दर्ता नभएको व्यक्तिलाई बिक्री गर्दा सार्वजनिक भएको मूल्यमा तोकिएको ढाँचामा बिजक दिई उपभोक्ता तहको कर समेत असूलउपर गराउने व्यवस्था गरिनेछ ।

तर उपदफा (६) बमोजिम नतोकिएको कुनै व्यक्तिले पनि स्वेच्छाले यस उपदफा बमोजिमको बिजक दिन सक्नेछ ।"

(१५) दफा १५ को उपदफा (२) पछि देहायको उपदफा (३) थपिएको छ :-

"(३) उपदफा (१) वा (२) मा जुनसुकै कुरा लेखिएको भए तापनि स्थानीय निकाय वा नेपालस्थित अन्तर्राष्ट्रिय संघ, संस्था वा नियोग वा नेपाल सरकार वा मूल्य अभिवृद्धि कर नलाग्ने वस्तुको कारोबार गर्ने सार्वजनिक संस्थानहरुले मूल्य अभिवृद्धि कर लाग्ने वस्तु वा सेवा बिक्री गर्दा कर असूलउपर गर्नु पर्नेछ । "

(१६) दफा १६ को,-

(क) उपदफा (१) पछि देहायको उपदफा (१क) थपिएको छ :-

"(१क) विभागले करदाताको कम्प्युटर तथ्याङ्क आधार (डाटावेश) मा निरन्तर पहुँच प्राप्त गर्न सक्नेछ ।"

(ख) उपदफा (३) पछि देहायको उपदफा (३क) थपिएको छ :-

"(३क) कर लाग्ने वस्तु वा सेवाको कारोबार गर्ने दर्ता नभएका व्यक्तिले प्रत्येक आर्थिक वर्षको लागि खरिद बिक्री खाता आफैंले प्रमाणित गराई राख्नु पर्नेछ । त्यस्तो खाता कर अधिकृतले जुनसुकै बखत जाँच गर्न सक्नेछ ।"

(१७) दफा १६क. को सट्टा देहायको दफा १६क. राखिएको छ :-

"१६क. कम्प्यूटर प्रशोधित अभिलेख प्रमाणको रुपमा ग्राह्य हुने : (१) प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि करको प्रयोजनको निमित्त अन्यथा प्रमाणित भएमा बाहेक विभाग वा अन्तर्गतका कार्यालयमा रहेका कम्प्यूटरबाट प्रशोधित करदाता सम्बन्धी अभिलेख प्रमाणको रुपमा ग्राह्य हुनेछ ।

(२) विभागले सूचना प्रकाशन गरी विद्युतीय माध्यमबाट बिजक जारी गर्ने, लेखा राख्ने, कर विवरण पेश गर्ने तथा भुक्तानी गर्ने सम्बन्धमा आवश्यक व्यवस्था गर्न सक्नेछ ।"

(१८) दफा १६क. पछि देहायको दफा १६ख. थपिएको छ :-

"१६ख. नोक्सान भएको वस्तुमा तिरेको कर कट्टी गर्ने : आगजनी, चोरी, दुर्घटना, टुटफुट वा ध्वंशात्मक गतिविधिको कारणले हानि नोक्सानी भएको वस्तुमा तिरेको मूल्य अभिवृद्धि कर तोकिए बमोजिम कट्टी गर्न पाईनेछ ।"

(१९) दफा १७ को,-

(क) उपदफा (२) को सट्टा देहायको उपदफा (२) राखिएको छ :-

"(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि व्यावसायिक वा व्यक्तिगत

को खण्ड (क) बमोजिम असूल गरेको मानिएको रकम सोही उपदफा बमोजिमको म्यादभित्र विभागमा दाखिला गर्नु पर्नेछ ।

(७) देहाय बमोजिमको अवस्थामा अग्रीम कर दाखिला गर्नु पर्ने र असूल गर्नु पर्ने व्यक्ति दुवैजना संयुक्त रुपमा र छुट्टाछुट्टै रुपमा सो कर रकम विभागमा दाखिला गर्न जिम्मेवार हुनेछन् :-

(क) अग्रीम कर असूल गर्नु पर्ने व्यक्तिले अग्रीम कर असूल नगरेमा, र

(ख) अग्रीम कर असूल गर्नु पर्ने व्यक्तिले उपदफा (४) बमोजिम असूल गरेको मानिने रकम उपदफा (६) बमोजिम विभागमा दाखिला नगरेमा ।

(८) उपदफा (७) बमोजिम अग्रीम कर दाखिला गर्नु पर्ने व्यक्तिले उपदफा (५) मा उल्लिखित म्याद समाप्त भएको पच्चीस दिनभित्र सो कर दाखिला गर्नु पर्नेछ ।

(९) अग्रीम कर असूल गर्नु पर्ने व्यक्तिले असूल नगरेको अग्रीम कर उपदफा (६) बमोजिम विभागमा दाखिला गरेको भए सो दाखिला भएको कर रकम वरावरको रकम सो कर दाखिला गर्नु पर्ने व्यक्तिबाट असूल उपर गर्न पाउनेछ ।

(१०) यस दफा बमोजिम दाखिला गरिएको अग्रीम कर दाखिला गर्नु पर्ने व्यक्तिले तिर्नु पर्ने बार्षिक कर दायित्वमा घटाउन पाउनेछ ।"

(६०) दफा ९६ को उपदफा (२) को,-

(क) खण्ड (क) को उपखण्ड (४) र (५) झिकिएका छन् ।

(ख) खण्ड (ग) को उपखण्ड (१) झिकिएको छ ।

(६१) दफा ९७ को,-

(क) उपदफा (१) मा रहेका "विभागले लिखित आदेश दिएमा बाहेक" भन्ने शब्दहरूको सट्टा "विभागले लिखित रुपमा आदेश दिएमा वा सार्वजनिक रुपमा

सूचना प्रकाशन गरी आदेश दिएमा बाहेक” भन्ने शब्दहरू राखिएका छन् ।

(ख) खण्ड (ख) मा रहेको “वा” भन्ने शब्द झिकिएको छ ।

(ग) खण्ड (ग) मा रहेको “प्राकृतिक व्यक्ति” भन्ने शब्दहरूको सट्टा “प्राकृतिक व्यक्ति, वा” भन्ने शब्दहरू राखिएका छन् ।

(घ) खण्ड (ग) पछि देहायको खण्ड (घ) थपिएको छ :-

“(घ) अनुसूची-१ को दफा १ को उपदफा (१३) बमोजिम कर दाखिला गर्ने सवारी साधनको धनी प्राकृतिक व्यक्ति भएमा त्यस्तो प्राकृतिक व्यक्ति ।”

(६२) दफा १०० को उपदफा (२) को सट्टा देहायको उपदफा (२) राखिएको छ :-

“(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि दफा ९६ को उपदफा (५) मा उल्लिखित अवस्थामा विभागले कुनै आय वर्ष वा सो वर्षको अंशको लागि दफा ९६ को उपदफा (२) को खण्ड (क) को उपखण्ड (१), (२), र (३) मा उल्लिखित रकमको आधारमा न्यायोचित रुपले सो व्यक्तिको कर निर्धारण गर्न सक्नेछ ।”

(६३) दफा १०१ को उपदफा (६) मा रहेका “सात दिनको” भन्ने शब्दहरूको सट्टा “पन्ध्र दिनको” भन्ने शब्दहरू राखिएका छन् ।

(६४) दफा १०६ को उपदफा (१) मा रहेका “कर विभागले” भन्ने शब्दहरूको सट्टा “विभागले” भन्ने शब्द राखिएको छ ।

(६५) दफा ११० पछि देहायको दफा ११०क. थपिएको छ :-

“११०क. किस्ताबन्दीमा बक्यौता कर असूली : दफा १११ बमोजिम मुद्दा चलाउनु अगावै कुनै व्यक्तिले तिर्ने बक्यौता रकम किस्ताबन्दीमा तिर्न लिखित अनुरोध गरेमा कर अधिकृतले मनासिव माफिकको म्याद दिई किस्ताबन्दीमा तिर्न स्वीकृति दिन सक्नेछ ।

(६६) दफा ११३ को उपदफा (३) को सट्टा देहायको उपदफा (३) राखिएको छ :-

“(३) कुनै व्यक्तिले उपदफा (१) बमोजिम रकम फिर्ता पाउन तोकिए बमोजिम विभागमा निवेदन दिएमा

विभागले निवेदन परेको मितिले साठी दिनभित्र त्यस्तो रकम फिर्ता गर्नु पर्नेछ ।"

(६७) दफा ११४ को उपदफा (१) को,-

(क) खण्ड (क) पछि देहायको खण्ड (क१) थपिएको छ :-

"(क१) दफा ९० को उपदफा (८) बमोजिम गरिएको निर्णय वा दिइएको आदेश,

(ख) खण्ड (ङ) मा रहेका "करको निर्धारण" भन्ने शब्दहरूपछि "वा दफा १०५ को उपदफा (५) बमोजिमको लिलाम बिक्री खर्चको निर्धारण" भन्ने शब्दहरू थपिएका छन् ।

(६८) दफा ११५ को,-

(क) उपदफा (६) मा रहेका "तिर्नु पर्ने करको पचास प्रतिशत" भन्ने शब्दहरूको सट्टा "अविवादित करको सम्पूर्ण रकम र विवादित करको एकतिहाई" भन्ने शब्दहरू राखिएका छन ।

(ख) उपदफा (८) मा रहेका "नब्बे दिनभित्र" भन्ने शब्दहरूको सट्टा "साठी दिनभित्र" भन्ने शब्दहरू राखिएका छन् ।

(६९) दफा ११७ को , -

(क) उपदफा (१) र (२) को सट्टा देहायका उपदफा (१) र (२) राखिएका छन् :-

"(१) कुनै व्यक्तिले देहाय बमोजिमको विवरण दाखिला नगरेमा त्यस्तो व्यक्तिलाई देहाय बमोजिम शुल्क लाग्नेछ :-

(क) दफा ९५ को उपदफा (१) बमोजिम कुनै आय वर्षको आय विवरण दाखिला नगरेमा प्रति विवरण दुई हजार रुपैंया,

(ख) अग्रीम कर असूल गर्नु पर्ने कुनै व्यक्तिले दफा ९५क.को उपदफा (५) बमोजिमको विवरण दाखिला नगरेमा त्यस्तो व्यक्तिलाई विवरण दाखिला गर्नु पर्ने मितिबाट विवरण दाखिला नभएको मितिसम्मको प्रत्येक महिना र महिनाको भागको लागि अग्रीम कर असूल गर्नु

पर्ने रकमको वार्षिक एक दशमलव पाँच प्रतिशतका दरले हुने रकम,

(ग) दफा ९६ को उपदफा (१) बमोजिम कुनै आय वर्षको आय विवरण दाखिला नगरेमा ऐनको दफा ४ को उपदफा (४) मा उल्लिखित व्यक्तिको हकमा एक सय रुपैंया प्रति महिनाका दरले हुने रकम र अन्य व्यक्तिको हकमा सो आय वर्षको आयको गणना गर्दा कुनै रकम कटाई पाउने भए सो नकटाई र कुनै रकम समावेश गर्नु पर्ने भए सो समावेश गरी हुने निर्धारणयोग्य आयको रकमको शून्य दशमलब एक प्रतिशत प्रति वर्षका दरले हुने रकम वा एक सय रुपैंया प्रति महिनाका दरले हुने रकममध्ये जुन बढी हुन्छ सो रकम ।"

(२) कुनै व्यक्तिले कुनै आय वर्षको दफा ८१ बमोजिम राख्नु पर्ने कागजात नराखेमा त्यस्तो व्यक्तिलाई त्यस्तो कागजात नराखेको वर्षको लागि कुनै आय वर्षको आयको गणना गर्दा कुनै रकम कटाई पाउने भए सो नकटाई र रकमहरू समावेश गर्नु पर्ने भए सो समावेश गरी हुने निर्धारणयोग्य आयको रकमको शून्य दशमलव एक प्रतिशतले हुने रकम वा एक हजार रुपैयाँमध्ये जुन बढी हुन्छ सो रकम शुल्क लाग्नेछ ।"

(७०) दफा ११८ को सट्टा देहायको दफा ११८ राखिएको छ :-

"११८. किस्ताबन्दीमा दाखिला गर्नेले अनुमानित कर कम हुने गरी बुझाएमा ब्याज लाग्ने : (१) कुनै व्यक्तिले कुनै आय वर्षमा दफा ९४ बमोजिम दाखिला गर्नु पर्ने किस्ता रकम सम्बन्धमा खण्ड (क) मा उल्लिखित रकमभन्दा खण्ड (ख) मा उल्लिखित रकम बढी भएमा यसरी बढी भएको रकममा उपदफा (२) बमोजिम ब्याज लाग्नेछ :-

(क) सो व्यक्तिले कुनै आय वर्षमा तिरेको प्रत्येक किस्ताको रकम,

(ख) सो आय वर्षमा प्रत्येक किस्ता अवधिको लागि किस्ताबन्दीको रुपमा बुझाउनु पर्ने कुल रकमको अनुमान वा संशोधित अनुमान सही भएको भए सो रकम र सो रकम सही नभएको भए दफा ३ को खण्ड (क) र (ख) मा उल्लिखित व्यक्तिले दाखिला गर्नु पर्ने कर रकमको प्रत्येक किस्ता अवधिको लागि किस्ताबन्दीको रुपमा बुझाउनु पर्ने रकमको नब्बे प्रतिशत रकम ।

(२) उपदफा (१) बमोजिमको व्यक्तिलाई सो वर्षको सो किस्ता बुझाउनु पर्ने मितिदेखि देहायको अवधिसम्मको प्रत्येक महिना र महिनाको भागको सामान्य ब्याजदरले ब्याज लाग्नेछ :-

(क) दफा ९९ को उपदफा (१) बमोजिमको कर निर्धारण गर्ने व्यक्तिको हकमा आय विवरण बुझाउनु पर्ने मितिसम्म,

(ख) दफा ९९ को उपदफा (१) बमोजिमको कर निर्धारण नगरेको कारणले विभागले दफा १०१ बमोजिम पहिलो पटक संशोधित कर निर्धारण गरेको व्यक्तिको हकमा दफा १०२ बमोजिम सो संशोधित कर निर्धारणको सूचना बुझाएको मितिसम्म ।

स्पष्टीकरण : यस दफाको प्रयोजनको लागि “किस्ताबन्दीको रुपमा बुझाउनु पर्ने रकम” भन्नाले एक पटक अनुमान पेश गरी सकेपछि संशोधित अनुमान पेश नगर्नेको तथा अनुमान पेश नगरेको कारणले दफा ९५ को उपदफा (७) बमोजिम विभागले अनुमान गरेको हकमा दफा ९४ को

उपदफा (१) बमोजिम र संशोधित अनुमान पेश गर्नेको हकमा तथा पेश गरिएको अनुमान वा संशोधित अनुमानमा सन्तुष्ट नभई दफा ९५ को उपदफा (७) बमोजिम विभागले अनुमान गरेको दफा ९५ को उपदफा (५) को व्यवस्था अनुसार गणना गरिएको किस्ताको रकम सम्झनु पर्छ ।"

(७१) दफा ११९ को,-

(क) उपदफा (३) को सट्टा देहायको उपदफा (३) राखिएको छ :-

"(३) अग्रीम कर असूल गर्नु पर्ने व्यक्तिले दफा ९५क. को उपदफा (८) वा अग्रीम कर कट्टी गर्ने व्यक्तिले दफा ९० को उपदफा (४) पालना नगरेको कारणले निजले बुझाउनु पर्ने व्याज निजले अग्रीम कर दाखिला गर्नु पर्ने वा अग्रीम कर कट्टी हुने व्यक्तिबाट असूल उपर गरी लिन पाउने छैन ।"

(ख) उपदफा (३) पछि देहायको उपदफा (४) थपिएको छ :-

"(४) दफा ११०क. बमोजिम दिइएको म्याद भित्र कर नतिरेमा तिर्न बांकी करमा वार्षिक पाँच प्रतिशतका दरले थप व्याज लगाई सो व्यक्तिवाट उपर गरिनेछ ।"

(७२) दफा ११९ पछि देहायको दफा ११९क. थपिएको छ :-

"११९क. शुल्क लाग्ने : यस ऐनमा अन्यथा व्यवस्था गरिएकोमा बाहेक यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको कुनै व्यवस्थाको पालना नगर्ने व्यक्तिलाई दफा १२८ बमोजिम तोकिएको जरिबाना सरहको शुल्क लाग्नेछ ।"

(७३) दफा १२१ मा रहेको "परिच्छेद - २३" मा भन्ने शब्दहरुको सट्टा "यस ऐनमा" भन्ने शब्दहरु राखिएको छ ।

(७४) दफा १२४ को स्पष्टीकरणको सट्टा देहायको स्पष्टीकरण राखिएको छ :-

"स्पष्टीकरण : यस दफाको प्रयोजनको लागि "विभागमा दिएको कुनै जानकारी वा विवरण" भन्नाले विभागमा वा यस ऐन बमोजिम कर्तव्य पालना गर्ने सिलसिलामा

विभागबाट अख्तियार प्राप्त अधिकृत समक्ष लिखित रुपमा दाखिला गरिएको विवरण र देहाय बमोजिम दाखिला गरिएको विवरण समेतलाई जनाउनेछ :-

(क) निवेदन, सूचना, विवरण, उजूरी, वयान वा यस ऐन बमोजिम दाखिला गरिएको, तयार पारिएको, दिइएको वा पेश गरिएको अन्य कागजात,

(ख) विभाग वा विभागका कुनै अधिकृत समक्ष पेश गरिएको कागजात,

(ग) विभाग वा कुनै अधिकृतले कुनै व्यक्तिलाई सोधेको प्रश्नको उत्तर, वा

(घ) विवरण दिइने कुराको मनासिव जानकारी भएको कुनै व्यक्तिले कुनै अर्को व्यक्तिमार्फत विभाग वा कुनै अधिकृतलाई दिएको जानकारी ।"

(७५) दफा १३६ पछि देहायको दफा १३६क. थपिएको छ :-

"१३६क. पुरस्कारको व्यवस्था : कुनै व्यक्तिले आफ्नो करको दायित्व सम्पूर्ण वा केही अंश छलेको वा छल्न कोशिस गरेको प्रमाण सहितको सूचना दिने व्यक्तिलाई त्यस्तो सूचनाको आधारमा असूलउपर गरिएको करको रकममध्ये निजले पेश गरेको प्रमाणबाट निर्धारण भए जतिको कर रकमको बीस प्रतिशत बराबरको रकम महानिर्देशकको निर्णयले पुरस्कार दिन सकिनेछ ।"

(७६) खारेजी : दफा ६६, ८९क. र ८९ख. खारेज गरिएको छ ।

(७७) अनुसूचीमा संशोधन : अनुसूची १ को,-

१. दफा १ को,-

(क) उपदफा (१), (२), (३), (४), (५), (६), र (७) को सट्टा देहायको उपदफा (१), (२), (३), (४), (५), (६) र (७) राखिएका छन् :-

"(१) कुनै आय वर्षमा बासिन्दा प्राकृतिक व्यक्तिको करयोग्य आयमा यस अनुसूचीको उपदफा (२) र (४) को अधिनमा रही देहाय बमोजिमको दरले कर लाग्नेछ :-

(क) दुई लाख रुपैंयासम्म रोजगारीको करयोग्य आय भएमा एक प्रतिशत कर लाग्ने ।

(ख) दुई लाख रुपैंयाभन्दा बढी तर तीन लाख रुपैंयासम्म करयोग्य आय भएमा खण्ड (क) बमोजिम दुई लाख रुपैंयासम्म दुई हजार रुपैंया र दुई लाख रुपैंयाभन्दा बढी करयोग्य आयमा पन्ध्र प्रतिशत,

(ग) तीन लाख रुपैंयाभन्दा बढी करयोग्य आय भएमा खण्ड (ख) बमोजिम तीन लाख रुपैंयासम्म सत्र हजार रुपैंया र तीन लाख रुपैंयाभन्दा बढी भएको करयोग्य आयमा पच्चीस प्रतिशत, र

(घ) पच्चीस लाख रुपैंया भन्दा बढी कर योग्य आय भएमा वढी भएजति करयोग्य आयको खण्ड (ग) बमोजिम लागेको करको दरमा थप चालीस प्रतिशत अतिरिक्त कर लाग्नेछ ।

तर एकलौटी फर्म दर्ता भएका करदाताको हकमा खण्ड (क) बमोजिमको एक प्रतिशत कर लाग्ने छैन ।

(२) कुनै आय वर्षमा दफा ५० बमोजिम छनौट गर्ने कुनै दम्पतीको करयोग्य आयमा यस अनुसूचीको उपदफा (४) को अधिनमा रही देहाय बमोजिमको दरमा कर लाग्नेछ :-

(क) दुई लाख पचास हजार रुपैंयासम्म रोजगारीको करयोग्य आय भएमा एक प्रतिशत कर लाग्ने,

(ख) दुई लाख पचास हजार रुपैंयाभन्दा बढी तर तीन लाख

पचास हजार रुपैंयासम्मको करयोग्य आय भएमा खण्ड (क) बमोजिम दुई लाख पचास हजार रुपैंयासम्म दुई हजार पाँच सय रुपैंया र दुई लाख पचास हजार रुपैंयाभन्दा बढी करयोग्य आयमा पन्ध्र प्रतिशत,

(ग) तीन लाख पचास हजार रुपैंयाभन्दा बढी करयोग्य आय भएमा खण्ड (ख) बमोजिम तीन लाख पचास हजार रुपैंयासम्म सत्र हजार पाँच सय रुपैंया र तीन लाख पचास हजार रुपैंयाभन्दा बढी करयोग्य आयमा पच्चीस प्रतिशत, र

(घ) पच्चीस लाख रुपैंया भन्दा बढि कर योग्य आय भएमा वढी भएजति करयोग्य आयको खण्ड (ग) बमोजिम लागेको करको दरमा थप चालीस प्रतिशत अतिरिक्त कर लाग्नेछ ।

तर एकलौटी फर्म दर्ता भएका करदाताको हकमा उपरोक्त खण्ड (क) बमोजिम एक प्रतिशत कर लाग्ने छैन ।

(३) यस अनुसूचीको उपदफा (४) मा उल्लिखित व्यवस्था देहायको अवस्थामा लागू हुनेछ :-

(क) बासिन्दा प्राकृतिक व्यक्तिको सम्बन्धमा कुनै आय वर्षमा दुई लाख रुपैंयाभन्दा बढी आय भएको वा दफा ५० बमोजिमको छनौट नगरेको बासिन्दा दम्पतीको सम्बन्धमा कुनै आय वर्षमा दुई लाख पचास हजार रुपैंयाभन्दा बढी आय भएको,

(ख) गैर-व्यावसायिक करयोग्य सम्पत्तिको निःसर्गबाट प्राप्त खूद लाभ सो प्राकृतिक व्यक्ति वा दम्पतीको आय र तदनुरुप करयोग्य आयको गणनामा समावेश भएको ।

(४) यस अनुसूचीको उपदफा (३) को अधिनमा रही देहायका व्यक्तिलाई देहाय बमोजिम कर लाग्नेछ :-

(क) देहायका रकममध्ये जुन बढी छ सो रकममा सो प्राकृतिक व्यक्ति वा दम्पतीको सो मात्र करयोग्य आय भए सरह मानी यस अनुसूचीको उपदफा (१) वा (२) बमोजिमको दरले कर लाग्नेछ :-

(१) सो प्राकृतिक व्यक्ति वा दम्पतीको जम्मा करयोग्य आयबाट सो लाभको रकम घटाई बाँकी हुन आउने रकम,

(२) प्राकृतिक व्यक्तिको सम्बन्धमा दुई लाख रुपैंया वा दम्पतीको सम्बन्धमा दुई लाख पचास हजार रुपैंया ।

(ख) सो करयोग्य आयको बाँकी रकमबाट दश प्रतिशतका दरले कर लाग्नेछ ।

तर,

(१) निःसर्ग भएको गैर व्यावसायिक करयोग्य सम्पत्ति (जग्गा तथा घरजग्गा) को स्वामित्व पाँच वर्ष वा सो भन्दा बढी भएको

छ भने दुई दशमलव पाँच प्रतिशतका दरले कर लाग्नेछ ।

(२) निःसर्ग भएको गैर व्यावसायिक करयोग्य सम्पत्ति (जग्गा तथा घरजग्गा) को स्वामित्व पाँच वर्षभन्दा कम रहेको छ भने पाँच प्रतिशतका दरले कर लाग्नेछ ।

(३) नेपाल धितोपत्र बोर्डमा सूचीकरण भएको निकायमा रहेको हितको निःसर्गबाट प्राप्त लाभको हकमा पाँच प्रतिशतको दरले कर लाग्नेछ ।

(५) नेपाल सरकारले तोकेको दूर्गम क्षेत्रमा कार्यरत प्राकृतिक व्यक्तिको दूर्गम भत्ता बापत तोकिए बमोजिम बढीमा पचास हजार रुपैयाँसम्म करयोग्य आयबाट घटाई बाँकी रहने रकममा मात्र यस दफा बमोजिम करको गणना गरिनेछ ।

(६) नेपालका विदेशस्थित कूटनैतिक नियोगमा कार्यरत कर्मचारीको वैदेशिक भत्ताको पचहत्तर प्रतिशत रकम करयोग्य आयबाट घटाई बाँकी रहने रकममा यस दफा बमोजिम करको गणना गरिनेछ ।

(७) यस ऐनको दफा ४ को उपदफा (४) बमोजिम करको रकम देहाय बमोजिम हुनेछ :-

(क) महानगरपालिका वा उपमहानगरपालिका क्षेत्रमा व्यवसाय गर्ने प्राकृतिक व्यक्तिका हकमा तीन हजार पाँच सय रुपैया,

(ख) नगरपालिका क्षेत्रमा व्यवसाय गर्ने प्राकृतिक व्यक्तिका हकमा दुई हजार रुपैंया,

(ग) खण्ड (क) र (ख) मा उल्लिखित क्षेत्र वाहेक अन्य क्षेत्रमा व्यवसाय गर्ने प्राकृतिक व्यक्तिका हकमा एक हजार दुई सय पचास रुपैंया ।"

(ख) उपदफा (८) पछि देहायका उपदफा (९), (१०), (११), (१२), (१३), (१४) र (१५) थपिएका छन् :-

"(९) यस दफामा अन्यन्त्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै बासिन्दा प्राकृतिक व्यक्तिको निवृत्तिभरण आय रहेछ भने प्राकृतिक व्यक्तिको लागि उपदफा (१) को खण्ड (क) वा दम्पत्तिको लागि उपदफा (२) को खण्ड (क) मा उल्लिखित रकमको पच्चीस प्रतिशत रकम करयोग्य आयबाट घटाई बाँकी रहने रकममा मात्र यस दफा बमोजिम करको गणना गरिनेछ ।

तर यसरी घटाइने रकमको सीमा तोकिए बमोजिमभन्दा बढी हुने छैन ।

(१०) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै बासिन्दा प्राकृतिक व्यक्ति अपाङ्ग रहेछ भने त्यस्तो प्राकृतिक व्यक्तिको लागि उपदफा (१) को खण्ड (क) वा दम्पतीको लागि उपदफा (२) को खण्ड (क) मा उल्लिखित रकमको पचास प्रतिशत थप रकम करयोग्य आयबाट घटाई बाँकी रहने रकममा मात्र यस दफा बमोजिम करको गणना गरिनेछ ।

(११) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै बासिन्दा प्राकृतिक व्यक्ति पारिश्रमिक आय मात्र आर्जन गर्ने महिला रहेछ भने त्यस्तो प्राकृतिक व्यक्तिले तिर्नु पर्ने कर रकममा दश प्रतिशत छूट हुनेछ ।

(१२) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै बासिन्दा प्राकृतिक व्यक्तिले लगानी बीमा गरेको रहेछ भने सो बापत

भुक्तानी गरेको वार्षिक प्रिमियम वा बीस हजार रुपैंयामा जुन घटी हुन्छ सो रकम करयोग्य आयबाट घटाई बाँकी रहने रकममा मात्र यस दफा बमोजिम करको गणना गरिनेछ ।

(१३) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि भाडाका सवारी साधन धनीहरूबाट देहाय बमोजिमको वार्षिक कर असूल गरिनेछ र सवारी साधन धनी प्राकृतिक व्यक्ति भएमा यसरी तिरेको कर नै अन्तिम हुनेछ :-

| सवारीको किसिम | प्रतिसवारी साधनमा बुझाउनु पर्ने वार्षिक कर |
|---|---|
| (क) मिनिबस, मिनि ट्रक, ट्रक र बस | रु. १,५००।- |
| (ख) कार, जिप, भ्यान, माइक्रो बस | रु. १,२००।- |
| (ग) थ्रि ह्वीलर, अटो रिक्सा, टेम्पो | रु. ८५०।- |
| (घ) ट्रेक्टर र पावर टिलर | रु. ७५०।- |

(१४) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि कुनै प्राकृतिक व्यक्तिले कुनै वर्षभरी पूर्णरुपले यस ऐनको दफा ११ मा उल्लिखित विशेष उद्योग सञ्चालनमा संलग्न रहेमा यस दफा बमोजिम करको गणना गर्दा पच्चीस प्रतिशत कर लाग्ने करयोग्य आयमा बीस प्रतिशतका दरले कर लाग्नेछ ।

(१५) कुनै प्राकृतिक व्यक्तिको कुनै आय वर्षमा निकासीबाट भएको करयोग्य आयमा करको गणना गर्दा पच्चीस प्रतिशत कर लाग्ने कर योग्य आयमा पन्ध्र प्रतिशतका दरले कर लाग्नेछ ।"

(२) दफा २ को,-

(क) उपदफा (२) मा रहेका "कुनै आय वर्षमा कुनै" भन्ने शब्दहरूपछि "चुरोट, बिँडी, सिगार, खानेसूर्ति, खैनी, मदिरा, बियर," भन्ने शब्दहरू थपिएका छन् ।

(ख) उपदफा (३) को खण्ड (ख) को सट्टा देहायको खण्ड (ख) राखिएको छ :-

"(ख) सो निकायले,-

(१) कुनै सडक, पुल, टनेल, रोप-वे वा आकाशे पुल निर्माण गरी सञ्चालन गरेमा,

स्पष्टीकरण : "रोप-वे" भन्नाले सामान ढुवानी गर्ने प्रयोजनका लागि निर्माण गरिएको वा मानिस ओसार पसार गर्ने प्रयोजनका लागि निर्माण गरिएको केवलकार समेतलाई सम्झनु पर्छ ।

(२) कुनै ट्रली बस वा ट्राम सञ्चालन गरेमा, वा

(३) सहकारी ऐन, २०४८ बमोजिम दर्ता भई कर छूट कारोबार गर्ने बाहेकको कारोबार गर्ने सहकारी संस्था ।

(ग) उपदफा (३) पछि देहायको उपदफा (३क) थपिएको छ :-

"(३क) कुनै निकायको नेपालको स्रोतबाट कुनै आय वर्षमा निकासीबाट भएको करयोग्य आयमा बीस प्रतिशतका दरले कर लाग्नेछ ।"

(घ) उपदफा (५) को सट्टा देहायको उपदफा (५) राखिएको छ :-

"(५) कुनै आय वर्षमा कुनै मृत बासिन्दा व्यक्तिको सम्पत्ति प्राप्त गर्ने वा रेखदेख गर्ने वा अशक्त बासिन्दा प्राकृतिक व्यक्तिको ट्रष्टको करयोग्य आयमा सो सम्पत्ति प्राप्त गर्ने वा रेखदेख गर्ने वा सो ट्रष्टलाई बासिन्दा प्राकृतिक व्यक्ति सरह मानी यस अनुसूचीको दफा १ को उपदफा (१) र उपदफा (४) बमोजिम कर लाग्नेछ ।"

(ङ) उपदफा (६) मा रहेको "दश" भन्ने शब्दको सट्टा "पाँच" भन्ने शब्द राखिएको छ :-

(च) उपदफा (७) को सट्टा देहायको उपदफा (७) राखिएको छ :-

"(७) कुनै आय वर्षमा दफा ७० मा उल्लिखित आयको सम्बन्धमा कुनै गैर-बासिन्दा व्यक्तिको करयोग्य आयमा पाँच प्रतिशतका दरले कर लाग्नेछ ।

तर नेपालबाट अर्को विदेशी मुलुकमा पुग्ने गरी प्रस्थान नहुने जल यातायात, हवाई यातायात

वा दूरसञ्चार सेवा उपलब्ध गराउने गैर बासिन्दा व्यक्तिको हकमा दुई प्रतिशतका दरले कर लाग्नेछ।

अनुसूची-२ को,-

(क) दफा २ को उपदफा (३) को खण्ड (ख) मा रहेको "दफा (५)" भन्ने शब्दको सट्टा "उपदफा (५)" भन्ने शब्द राखिएको छ ।

(ख) दफा ३ को उपदफा (२) पछि देहायका उपदफा (३) र (४) थपिएका छन् :-

"(३) उत्पादनमूलक उद्योगहरुले आफ्नो उद्योगको निमित्त आवश्यक पर्ने उर्जाशक्ति उत्पादन गर्न पूँजीकृत गरेको सम्पत्तिको पूँजीगत रकमको पचास प्रतिशत सोही वर्ष ह्रास खर्च बापत कट्टी दाबी गर्न सक्नेछ ।

(४) कुनै व्यक्तिले फिस्कल प्रिन्टर र क्यास मेशिन राखी बिल बिजक जारी गर्ने गरेमा सो प्रिन्टर तथा क्यास मेशिनमा भएको खर्चको एकमुष्ट रकम ह्रासखर्च बापत सोही वर्ष दाबी गर्न सक्नेछ ।"

३४. भन्सार ऐन, २०६४ मा संशोधन : भन्सार ऐन, २०६४ को,-

(१) दफा २ को,-

(क) खण्ड (द) को सट्टा देहायको खण्ड (द) राखिएको छ :-

"(द) "भन्सार अधिकृत" भन्नाले प्रमुख भन्सार प्रशासक, प्रमुख भन्सार अधिकृत, प्रमुख भन्सार परीक्षक, भन्सार अधिकृत वा भन्सार परीक्षक सम्झनु पर्छ र सो शब्दले भन्सार कार्यालय वा छोटी भन्सार कार्यालयको प्रमुख र दफा ८४ बमोजिम अर्थ मन्त्रालयले तोकेको अधिकारी समेतलाई जनाउँछ ।"

(ख) खण्ड (न) पछि देहायको खण्ड (न१) थपिएको छ :-

"(न१) "भन्सार जाँचपास परीक्षण कार्यालय" भन्नाले दफा ३४ बमोजिम जाँचपास पछिको परीक्षणको कार्य गर्नका लागि स्थापना गरिएको कार्यालयलाई सम्झनु पर्छ ।"

(२) दफा ४ पछि देहायको दफा ४क. थपिएको छ :-

"४क "भन्सार जाँचपास परीक्षण कार्यालयको स्थापना : (१) नेपाल सरकारले नेपाल राजपत्रमा सूचना प्रकाशन गरी आवश्यकता अनुसार भन्सार जाँचपास परीक्षण कार्यालय स्थापना गर्न सक्नेछ ।

(२) यो दफा प्रारम्भ हुनुभन्दा अघि स्थापना भएको भन्सार जाँचपास परीक्षण कार्यालय यसै दफा बमोजिम स्थापना भएको मानिनेछ ।"

(३) दफा ८ को उपदफा (१) मा रहेका "भन्सार कार्यालयमा दर्ता भएको" भन्ने शब्दहरुको सट्टा "भन्सार कार्यालयमा दर्ता भएको वा कम्प्युटर प्रणालीमार्फत भन्सार कार्यालयमा प्राप्त भएको" भन्ने शव्दहरु राखिएका छन् ।

(४) दफा १३ को,-

(क) उपदफा (१६) मा रहेका "मालवस्तु जाँचपास हुँदाका दिन" भन्ने शब्दहरुको सट्टा "सो मालवस्तुको प्रज्ञापन पत्र भन्सार कार्यालयमा दर्ता भएको वा कम्प्युटर प्रणालीमार्फत भन्सार कार्यालयमा प्राप्त भएको दिन" भन्ने शब्दहरु राखिएका छन् ।

(ख) उपदफा (१६) पछि देहायका उपदफा (१७), (१८), र (१९) थप गरिएका छन् :-

"(१७) यस दफामा अन्यत्र जुनसुकै कुरा लेखिएको भए तापनि यस दफा बमोजिम भन्सार अधिकृतले भन्सार मूल्य निर्धारण गर्दा यस दफामा उल्लेख भएको विधि वा प्रक्रिया अनुकूल नभएमा वा सो मूल्य शंङ्कास्पद छ भन्ने विश्वास गर्नुपर्ने मनासिव कारण भएमा त्यस्तो मालवस्तुको यस दफा बमोजिम पुनः मूल्य निर्धारण गर्न महानिर्देशकले आदेश दिन सक्नेछ ।

(१८) उपदफा (१७) बमोजिम आदेश प्राप्त भएमा भन्सार अधिकृतले आवश्यक जाँचवुझ गरी तीस दिनभित्र पुनः भन्सार मूल्य निर्धारण गरी महानिर्देशकलाई जानकारी दिनु पर्नेछ ।

(१९) उपदफा (१७) बमोजिमको आदेश दिंदा महानिर्देशकले त्यस्तो मालवस्तु जाँचपास भएको मितिले नब्बे दिनभित्र दिनु पर्नेछ ।"

(५) दफा १६ को उपदफा (४) मा रहेका "मालबस्तु जाँचपास हुने दिनमा" भन्ने शव्दहरुको सट्टा "त्यस्तो मालबस्तुको प्रज्ञापन पत्र भन्सार कार्यालयमा दर्ता भएको वा कम्प्यूटर प्रणाली मार्फत भन्सार कार्यालयमा प्राप्त भएको दिनमा" भन्ने शव्दहरु राखिएका छन् ।

(६) दफा १८ को उपदफा (४) पछि देहायका उपदफा (५) र (६) थप गरिएका छन :-

"(५) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भए तापनि मालवस्तु निकासी वा पैठारी गर्ने व्यक्तिले मालवस्तुको विवरण प्रज्ञापन पत्रको ढाँचामा विद्युतीय माध्यमबाट कम्प्यूटर प्रणाली मार्फत भन्सार कार्यालयमा पठाउन सक्नेछ ।

(६) उपदफा (५) बमोजिम विद्युतीय माध्यमबाट मालवस्तुको प्रज्ञापन पत्र पठाएकोमा निकासी वा पैठारीकर्ताले उपदफा (१) बमोजिमका कागजातहरु भन्सार अधिकृत समक्ष पेश गर्नु पर्नेछ ।"

(७) दफा ३४ को,-

(क) उपदफा (२) र (३) को सट्टा देहायको उपदफा (२) र (३) राखिएका छन् :-

"(२) उपदफा (१) बमोजिम परीक्षण गर्दा पैठारीकर्ताले पैठारी गरेका मालवस्तु निजले घोषणा गरेकोभन्दा भिन्न मालवस्तु पाइएमा वा निजले गरेको घोषणा अनुरुप नभएको देखिएमा वा कारोवार मूल्य वा मालवस्तुको परिमाण घटी घोषणा गरेको देखिएमा र सो कारणले घटी महसुल असूल भएको देखिएमा भन्सार अधिकृतले त्यसरी घटी भएको मूल्य वा परिमाणमा पैठारी हुँदाका बखत लाग्ने महसुल निजबाट तत्काल असूल गरी घटी कारोवार मूल्य वा परिमाण घोषणा गरेबापत निजलाई यस ऐन बमोजिम कारवाही गर्नेछ ।

तर घटी कारोवार मूल्य घोषणा गरेकोमा लाग्ने महसुलको शतप्रतिशत जरिवाना गर्नेछ ।

"(३) उपदफा (१) बमोजिम परीक्षण गर्दा मालवस्तुको वर्गीकरणको उपशीर्षक फरक परेको कारणले कम महसुल असूल भएको देखिएमा त्यस्तो कम महसुल

रकम र सो बरावरको जरिवाना रकम सम्बन्धित कार्यालयले पैठारीकर्ताबाट तत्काल असूल गर्नेछ । ”

(ख) उपदफा (३) पछि देहायका उपदफा (३क), (३ख), (३ग), (३घ), (३ङ) र (३च) थपिएका छन् :-

“(३क) महानिर्देशक वा भन्सार अधिकृतले यस दफा बमोजिमको कारवाही गर्दा यस ऐन र यस ऐन अन्तर्गत बनेको नियममा सम्बन्धित व्यक्तिलाई झिकाउने, बयान गराउने, प्रमाण वुझ्ने, लिखत पेश गर्न लगाउने, सूचना वा म्याद जारी गर्ने सम्बन्धमा भन्सार अधिकृतलाई भएको अधिकार र तत्सम्बन्धी प्रक्रिया प्रयोग र अवलम्वन गर्न सक्नेछ ।

(३ख) यस दफा बमोजिम परीक्षण गर्दा जारी गरिएको म्यादमा उपस्थित नहुने वा माग गरिए बमोजिम लिखत प्रमाण वा कागजात पेश नगर्ने पैठारीकर्ताको महानिर्देशक वा भन्सार अधिकृतले उपलव्ध भएसम्मका लिखित प्रमाण वा कागजातका आधारमा परीक्षण गर्न सक्नेछ ।

तर, यस उपदफा बमोजिम परीक्षण गरिसकेपछि सो पैठारीकर्ताका सम्वन्धमा पछि थप प्रमाण कागजात प्राप्त भएमा त्यस्ता प्रमाण कागजातका आधारमा यस दफा बमोजिम पुनः परीक्षण गर्न यस उपदफाले बाधा पुऱ्याएको मानिने छैन ।

(३ग) यस दफा बमोजिम महसुल निर्धारण गर्दा सम्बन्धित व्यक्तिलाई पन्ध्र दिनको म्याद दिई सफाई पेश गर्ने मौका दिनु पर्नेछ ।

(३घ) यस दफा बमोजिम निर्धारण भएको महसुल तथा जरिवाना वापतको रकम दाखिला गर्ने आदेश प्राप्त गरेको मितिले पैंतीस दिनभित्र त्यस्तो आदेश प्राप्त गर्ने व्यक्तिले सोही आदेशमा तोकिए बमोजिमको रकम दाखिला गर्नु पर्नेछ । सो अवधिभित्र दाखिला नगरेमा त्यस्तो महसुल तथा जरिवाना दाखिला गर्ने आदेश भएको मितिदेखि वार्षिक पन्ध्र प्रतिशतका दरले ब्याज समेत गणना गरी असूलउपर गरिनेछ ।

(३ङ) उपदफा (३घ) बमोजिम तिर्नु बुझाउनु पर्ने रकम नवुझाउने पैठारीकर्ताको कारोवार तथा चल अचल सम्पत्ति रोक्का गरी भन्सार अधिकृतले सोही सम्पत्तिबाट त्यस्तो रकम असूलउपर गर्नेछ ।

(३च) उपदफा (३ङ) बमोजिम रकम असूल हुन नसकेमा त्यस्तो रकम सरकारी बाँकी सरह असूलउपर गरिनेछ ।”

(८) दफा ९३ को सट्टा देहायको दफा ९३ राखिएको छ :-

“९३. निर्देशिका बनाउन सक्ने अधिकार : विभागले यो ऐन वा यस ऐन अन्तर्गत बनेको नियमको अधीनमा रही मालवस्तुको मूल्याङ्कन गर्ने, छनौट प्रणाली बमोजिम मालवस्तु जाँचपास गर्ने, जाँचपास पछिको परीक्षण गर्ने तथा मालवस्तु लिलाम गर्ने सम्बन्धमा निर्देशिका बनाई लागू गर्न सक्नेछ ।”

३५. औद्योगिक व्यवसाय ऐन, २०४९ को दफा १५ को खण्ड (क) झिकिएको छ ।

३६. संशोधन वा खारेजी बहाल रहने अवधि : प्रचलित कानूनमा जुनसुकै कुरा लेखिएको भए तापनि यस अध्यादेशद्वारा संशोधन वा खारेज भएका ऐनका प्रावधान यो अध्यादेश वहाल रहेसम्मको लागि मात्र संशोधन वा खारेज हुनेछ र सो अवधि व्यतित भएपछि त्यस्ता प्रावधान स्वतः जागेको मानिनेछ ।

## अनुसूची-१

**भन्सार महसुल :**

१. विदेशबाट नेपालभित्र पैठारी हुने मालवस्तुमा आर्थिक ऐन, २०६८ को अनुसूची-१ मा उल्लिखित शीर्षक, उपशीर्षक, मालवस्तुका विवरणहरू र अन्य व्यवस्थाहरूमा समेत देहाय बमोजिम संशोधन र थप गरी भन्सार महसुल दर लगाइएको छ । यसमा उल्लिखित संशोधन र थप बाहेकका परिच्छेद र भागका द्रष्टव्यहरू, शीर्षक, उपशीर्षकहरू, मालवस्तुका विवरणहरू र मालवस्तुको पैठारीका दरहरू समेत आर्थिक ऐन, २०६८ बमोजिम नै हुनेछन् ।

| शीर्षक | उपशीर्षक | मालवस्तुको विवरण | पैठारी भन्सार महसुल दर अन्यथा उल्लेख भएकोमा बाहेक मोल प्रतिशतमा |
|---|---|---|---|
| १ | २ | ३ | ४ |
| | | **आर्थिक ऐन,२०६८ को अनुसूची १ को,-** | |

| | | | |
|---|---|---|---|
| | | (१) भाग १ को द्रष्टव्य १ को (क) मा रहेको “शीर्षक ०३.०१, ०३.०६ वा ०३.०७” भन्ने वाक्यांशको सट्टा “शीर्षक ०३.०१, ०३.०६, ०३.०७ वा ०३.०८” भन्ने वाक्यांश राखिएको छ । | |
| | | (२) उपशीर्षक ०१०१.१०.०० लाई हटाई देहायका शब्दावलीहरु र उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | | “-घोडाहरु : | |
| | ०१०१.२१.०० | --नश्ल सुधारका लागि विशुद्ध नश्लका | १० |
| | ०१०१.२९.०० | --अन्य | १० |
| | ०१०१.३०.०० | -गधाहरु | १०” |
| | | (३) उपशीर्षक ०१०२.१०.०० लाई हटाई देहायका शब्दावलीहरु र उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | | “-गोजातीय चौपाया : | |
| | ०१०२.२१.०० | --नश्ल सुधारका लागि विशुद्ध नश्लका | १० |
| | ०१०२.२९.०० | --अन्य | १० |
| | | -भैंसी: | |
| | ०१०२.३१.०० | -- नश्ल सुधारका लागि विशुद्ध नश्लका | १० |
| | ०१०२.३९.०० | --अन्य | १०” |
| | | (४) उपशीर्षक ०१०५.१९.०० लाई हटाई देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | “०१०५.१३.०० | --हाँस (डक) हरु | १० |
| | ०१०५.१४.०० | --हाँस (गिज) हरु | १० |
| | ०१०५.१५.०० | --गिनिजातका चराहरु | १०” |
| | | (५) उपशीर्षक ०१०६.१२.०० को सट्टा देहायको उपशीर्षक ०१०६.१२.०० राखी सो पछि देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |

| | | |
|---|---|---|
| “०१०६.१२.०० | --तिमिङ्गल (ह्वेल) हरू, सोंस वा गुँज (डल्फिन) हरू र शिंशुक (परपस) हरू (तिमिगण (सिटेशिया) श्रेणीका स्तनपायीहरू); समुद्रीगाई (मैनेटी) हरू र हस्तिमकर (डुगंग) हरू (जलीय स्तनधारी (सिरेनिया) श्रेणीका स्तनपायीहरू); सिलहरु, सी लायनहरु र वालरसहरु (पाइनिपेडिया उपश्रेणीका स्तनपायीहरु) | १० |
| ०१०६.१३.०० | --ऊँट र अन्य ऊँटजातीय जन्तुहरु (*क्यामेलिडाई*) | १० |
| ०१०६.१४.०० | --खरायोहरु | १०” |
| | (६) उपशीर्षक ०१०६.३२.०० पछि देहायको उपशीर्षक थप गरिएको छ : | |
| “०१०६.३३.०० | --सुतुरमुर्ग (अष्ट्रिच) हरु (*ड्रोमाउस नोभाहोल्लान्डिया*) | १०” |
| | (७) उपशीर्षक ०१०६.३९.०० पछि देहायको शब्दावली र उपशीर्षकहरु थप गरिएका छन्: | |
| | “-कीराहरु: | |
| ०१०६.४१.०० | --माहुरीहरु | १० |
| ०१०६.४९.०० | --अन्य | १०” |
| | (८) उपशीर्षक ०२०७.३ देखि ०२०७.३६.०० सम्मका उपशीर्षकहरु हटाई देहायका शब्दावलीहरु र उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | “-हाँस (डक) हरुको: | |
| ०२०७.४१.०० | --टुक्रा नपारिएको (सिंगो), ताजा वा चिस्याइएको (फ्रेस वा चिल्ड) | १० |
| ०२०७.४२.०० | --टुक्रा नपारिएको (सिंगो), हिमीकृत (फ्रोजन) | १० |
| ०२०७.४३.०० | --ताजा वा चिस्याइएका बोसोयुक्त कलेजो (फ्याटी लिभर) हरु | १० |
| ०२०७.४४.०० | --अन्य, ताजा वा चिस्याइएको (फ्रेस वा चिल्ड) | १० |

| | | | |
|---|---|---|---|
| | ०२०७.४५.०० | --अन्य, हिमीकृत (फ्रोजन) | १० |
| | | -हांस (गीज) हरुको: | |
| | ०२०७.५१.०० | --टुक्रा नपारिएको (सिंगो), ताजा वा चिस्याइएको (फ्रेस वा चिल्ड) | १० |
| | ०२०७.५२.०० | --टुक्रा नपारिएको (सिंगो), हिमीकृत (फ्रोजन) | १० |
| | ०२०७.५३.०० | --ताजा वा चिस्याइएका बोसोयुक्त कलेजो (फ्याटी लिभर) हरु | १० |
| | ०२०७.५४.०० | --अन्य, ताजा वा चिस्याइएको (फ्रेस वा चिल्ड) | १० |
| | ०२०७.५५.०० | --अन्य, हिमीकृत (फ्रोजन) | १० |
| | ०२०७.६०.०० | -गिनी जातका चराहरुको | १०" |
| | | (९) उपशीर्षक ०२०८.४०.०० को सट्टा देहायको उपशीर्षक ०२०८.४०.०० राखिएको छ :- | |
| | "०२०८.४०.०० | -तिमिङ्गल (ह्वेल) हरू, सौंस वा गुँज (डल्फिन) हरू र शिंशुक (परपस) हरू (तिमिगण श्रेणीका स्तनपायीहरू) को; समुद्रीगाई (मैनेटी) र हस्तिमकर (डुगङ्ग) हरू (जलीय स्तनधारी (सिरेनिया) श्रेणीका स्तनपायीहरू) को; सिलहरु, सी लायनहरु र वालरसहरु (पाइनिपेडिया उपश्रेणीका स्तनपायीहरु) को | १०" |
| | | (१०) उपशीर्षक ०२०८.५०.०० पछि देहायको उपशीर्षक थपिएको छ :- | |
| | "०२०८.६०.०० | -ऊँट र अन्य ऊँटजातीय जन्तुहरु (*क्यामेलिडाई*) को | १०" |
| | | (११) शीर्षक ०२.०९ को सट्टा देहायको शीर्षक ०२.०९ राखिएको छ :- | |
| "०२.०९ | | **नखारिएको वा अन्य प्रकारले निस्सारण नगरिएको, ताजा, चिस्याइएको, हिमीकृत, लवणित, नून पानीमा डुबाएको, सुकाएको वा धूमित मासु नभएको सुंगुरको बोसो (पिग फ्याट), र कुखुराको बोसो (पौल्ट्री फ्याट)।** | |

| | | | |
|---|---|---|---|
| | ०२०९.१०.०० | -सुँगुर (पिग) हरुको | १० |
| | ०२०९.९०.०० | -अन्य | १०" |
| | | (१२) उपशीर्षक ०२१०.९२.०० को सट्टा देहायको उपशीर्षक ०२१०.९२.०० राखिएको छ :- | |
| | "०२१०.९२.०० | --तिमिङ्गल (ह्वेल)हरु, सोंस वा गुँज (डल्फिन) हरु, तथा शिंशुक (परपस) हरु (तिमिगण (सिटासिया) श्रेणीका स्तनपायीहरू) को; समुद्रीगाई (मैनेटी) तथा हस्तिमकर (डुगांग) हरू (जलीय स्तनधारी) (सिरेनिया) श्रेणीका स्तनपायीहरू) को; सिलहरु, सी लायनहरु र वालरसहरु (पाइनिपेडिया उपश्रेणीका स्तनपायीहरु) को | १०" |
| | | (१३) उपशीर्षक ०३०१.१०.०० सट्टा देहायको शब्दावली र उपशीर्षकहरु राखिएका छन् :- | |
| | | "-आलङकारिक माछा : | |
| | ०३०१.११.०० | --ताजा पानीको | १० |
| | ०३०१.१९.०० | --अन्य | १०" |
| | | (१४) उपशीर्षकहरु ०३०१.९३.०० र ०३०१.९४.०० को सट्टा देहायका उपशीर्षकहरु ०३०१.९३.०० र ०३०१.९४.०० को राखिएका छन् :- | |
| | "०३०१.९३.०० | --कार्प (*साइप्रिनस कार्पिओ, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडिलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस*) | १० |
| | ०३०१.९४.०० | --एटलान्टिक र प्यासिफिक ब्लुफिन टुनाहरु (*थुनुस थाइनस, थुनुस ओरियन्टालिस*) | १०" |
| | | (१५) उपशीर्षक ०३०२.१२.०० सट्टा देहायका उपशीर्षकहरु राखिएका छन् :- | |
| | "०३०२.१३.०० | --प्यासिफिक सालमोन (*अङ्कोरिङ्कस नेर्का, अङ्कोरिङ्कस गोर्बुशा, अङ्कोरिङ्कस केटा, अङ्कोरिङ्कस शिच्वत्शा, अङ्कोरिङ्कस किसुच, अङ्कोरिङ्कस मसोउ र अङ्कोरिङ्कस रडुरस*) | १० |

| | | | |
|---|---|---|---|
| | ०३०२.१४.०० | --एटलाण्टिक साल्मोन *(साल्मो सालार)* र डान्यूब सालमोन *(हूचो हुचो)* | १०" |
| | | (१६) उपशीर्षक ०३०२.२३.०० पछि देहायको उपशीर्षक थपिएको छ :- | |
| | "०३०२.२४.०० | --टर्बोट्हरु *(सेट्टा मेक्सिमा)* | १०" |
| | | (१७) उपशीर्षक ०३०२.३५.०० को सट्टा देहायको उपशीर्षक ०३०२.३५.०० राखिएको छ :- | |
| | "०३०२.३५.०० | --एटलान्टिक र प्यासिफिक ब्लुफिन टुनाहरु *(थुनुस थाइनस, थुनुस ओरियन्टालिस)* | १०" |
| | | (१८) उपशीर्षकहरु ०३०२.४०.०० देखि ०३०२.७०.०० सम्म र सोका शब्दावलीको सट्टा देहायका उपशीर्षकहरु र शब्दावलीहरु राखिएका छन् :- | |
| | | -कलेजो र फुलहरु बाहेक हेरिङ्हरु (हिलसा) *(क्लुपिया हेरेन्गास,क्लुपिया पल्लासी)*, एङ्कोभिज *(इङग्रालिस जातहरु)*, सार्डिनहरु *(सार्डिना पिल्कार्डस्, सार्डिनोप जातहरु)*, सार्डिनेला *(सार्डिनेला जातहरु)*, ब्रिसलिन वा स्प्राटहरु *(स्प्राटस स्प्राटस)*, म्याकरेल *(स्कम्बर स्कम्ब्रस, स्कम्बर अस्ट्रेलासिकस, स्कम्बर जापोनिकस)*, ज्याक र हर्ष म्याकरेल *(ट्राचुरुस जातहरु)*, कोबिया *(राकिसेन्ट्रोन कानाडम)* र सोर्डफिस *(जिफियास ग्लाडिअस)* : | |
| | "०३०२.४१.०० | --हेरिङ्हरु *(क्लुपिया हेरेन्गास, क्लुपिया पल्लासी)* | १० |
| | ०३०२.४२.०० | --एङ्कोभिहरु *(इङग्रालिस जातहरु)* | १० |
| | ०३०२.४३.०० | --सार्डिनहरु *(सार्डिना पिल्कार्डस्, सार्डिनोप जातहरु)* सार्डिनेला *(सार्डिनेला जातहरु)*, ब्रिसलिन वा स्प्राटस *(स्प्राटस स्प्राटस)* | १० |
| | ०३०२.४४.०० | --म्याकरेल *(स्कम्बर स्कम्ब्रस, स्कम्बर अस्ट्रेलासिकस, स्कम्बर जापोनिकस)* | १० |
| | ०३०२.४५.०० | --ज्याक र हर्ष म्याकरेल *(ट्राचुरुस जातहरु)* | १० |
| | ०३०२.४६.०० | *--कोबिआ (राकिसेन्ट्रोन कानाडम)* | १० |

| | | |
|---|---|---|
| ०३०२.४७.०० | --सोर्डफिस *(जिफियास ग्लाडिअस)* | १० |
| | -कलेजो र फुलहरु बाहेक *ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछा : | |
| ०३०२.५१.०० | --कड *(ग्याडुस मरहुआ, ग्याडुस ओग्याक, ग्याडुस म्याक्रोसिफालस)* | १० |
| ०३०२.५२.०० | --ह्याड्डक *(मेलानोग्रामस एग्लेफिनस)* | १० |
| ०३०२.५३.०० | --कोलफिस *(पोलाकिअस भिरेन्स)* | १० |
| ०३०२.५४.०० | --हेक *(मर्लुसिअस जातहरु, यूरोफिसिस जातहरु)* | १० |
| ०३०२.५५.०० | --अलास्का पोलाक *(थिरेग्रा काल्कोग्रामा)* | १० |
| ०३०२.५६.०० | --ब्लु ह्वाइटिङहरु *(माइक्रोमेसिस्टस पोटासु, माइक्रोमेसिस्टस अस्ट्रालिस)* | १० |
| ०३०२.५९.०० | --अन्य | १० |
| | -कलेजो र फुलहरु बाहेक, तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु),* क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु),* कार्प *(साइप्रिनस कार्पियो, क्यारासियस क्यारासियस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोप्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस),* बाम (इल) हरु *(एङ्गुइला जातहरु),* नाइल पर्च *(ल्याटेस निलोटिकस)* र स्नेकहेड्हरु *(चान्ना जातहरु)* : | |
| ०३०२.७१.०० | --तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु),* | १० |
| ०३०२.७२.०० | --क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु)* | १० |
| ०३०२.७३.०० | --कार्प *(साइप्रिनस कार्पियो, क्यारासियस क्यारासियस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोप्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस),* | १० |
| ०३०२.७४.०० | --बाम (इल) हरु *(एङ्गुइला जातहरु)* | १० |

| | | | |
|---|---|---|---|
| | ०३०२.७९.०० | --अन्य | १० |
| | | -कलेजो र फुलहरु बाहेक अन्य माछा : | |
| | ०३०२.८१.०० | --डगफिस र अन्य सार्कहरु | १० |
| | ०३०२.८२.०० | --रेइ र स्केटहरु *(रेजिडाए)* | १० |
| | ०३०२.८३.०० | --टूथफिस *(डिसोस्टिकस जातहरु)* | १० |
| | ०३०२.८४.०० | --सिबास *(डिसेन्ट्रारकस जातहरु)* | १० |
| | ०३०२.८५.०० | --सिब्रिम *(स्पेरिडाइ)* | १० |
| | ०३०२.८९.०० | --अन्य | १० |
| | ०३०२.९०.०० | -कलेजो र फुलहरु | १०" |
| | | (१९) उपशीर्षक ०३०३.१ देखि ०३०३.२९.०० सम्मका उपशीर्षकहरु तथा शब्दावलीको सट्टा देहायका उपशीर्षकहरु तथा शब्दावली राखिएका छन् **:-** | |
| | | "-कलेजो र फुलहरु बाहेकको साल्मोनीडाइः | |
| | ०३०३.११.०० | --शक आई सालमोन (रेड सालमोन) *(ओङ्कोरिङ्कस नेर्का)* | १० |
| | ०३०३.१२.०० | --अन्य प्यासिफिक साल्मोन *(अङ्कोरिङ्कस गोर्बुसा, अङ्कोरिङ्कस केटा, अङ्कोरिङ्कस शावित्चा, अङ्कोरिङ्कस किसुच, अङ्कोरिङ्कस मासोउ तथा अङ्कोरिङ्कस रोडुरस)* | १० |
| | ०३०३.१३.०० | --एटलान्टिक साल्मोन *(साल्मो सालार)* र *ड्यान्युव साल्मोन (हुचो हुचो)* | १० |
| | ०३०३.१४.०० | --ट्राउट *(साल्मो ट्रटा, अङ्कोरिङ्कस माइकिस, अङ्कोरिङ्कस क्लार्की, अङ्कोरिङ्कस अक्वाबोनिटा, अङ्कोरिङ्कस गिलाई, अङ्कोरिङ्कस अपाचे र अङ्कोरिङ्कस क्राइसोगेष्टर)* | १० |
| | ०३०३.१९.०० | --अन्य | १० |

| | | | |
|---|---|---|---|
| | | -कलेजो र फुलहरु बाहेकका तिलापियाहरु (*ओरेओक्रोमिस जातहरु),* क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु),* कार्प (*साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस),* बाम (इल) हरु (*एङ्गुइला जातहरु),* नाइल पर्च (*ल्याटेस निलोटिकस)* र स्नेकहेड्हरु (*चान्ना जातहरु)* : | |
| | ०३०३.२३.०० | --तिलापियाहरु (*ओरेओक्रोमिस जातहरु)* | १० |
| | ०३०३.२४.०० | --क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु)* | १० |
| | ०३०३.२५.०० | --कार्प (*साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस)* | १० |
| | ०३०३.२६.०० | --बाम (इल) हरु (*एङ्गुइला जातहरु*) | १० |
| | ०३०३.२९.०० | --अन्य | १०" |
| | | (२०) उपशीर्षक ०३०३.३३.०० पछि देहायको उपशीर्षक थप गरिएको छ :- | |
| | "०३०३.३४.०० | --टर्बोट्हरु*(सेट्टा मेक्सिमा)* | १०" |
| | | (२१) उपशीर्षक ०३०३.४५.०० को सट्टा देहायको उपशीर्षक ०३०३.४५.०० राखिएको छ :- | |
| | "०३०३.४५.०० | --एटलान्टिक र प्यासिफिक ब्लुफिन टुनाहरु (*थुनुस थाइनस, थुनुस ओरियन्टालिस*) | १०" |
| | | (२२)उपशीर्षक ०३०३.५ देखि ०३०३.८०.०० सम्मका उपशीर्षकहरुको सट्टा देहायका उपशीर्षकहरु राखिएका छन् :- | |

| | | | |
|---|---|---|---|
| | | "-कलेजो र फुलहरु बाहेकका हेरिङ हरु *(क्लुपिया हेरेन्गास, क्लुपिया पल्लासी)*, सार्डिनहरु *(सार्डिना पिल्कार्डस्, सार्डिनोप जातहरु)*, सार्डिनेला *(सार्डिनेला जातहरु)*, ब्रिसलिन वा स्प्राटस *(स्प्राटस स्प्राटस)*, म्याकरेल *(स्कम्बर स्कम्ब्रस, स्कम्बर अस्ट्रेलासिकस, स्कम्बर जापोनिकस)*, ज्याक र हर्ष म्याकरेल *(ट्राचुरुस जातहरु)*, कोबिया *(राकिसेन्ट्रोन कानाडम)* र सोर्डफिस *(जिफियास ग्लाडिअस)* : | |
| | ०३०३.५१.०० | --हेरिङहरु *(क्लुपिया हेरेङ्गस, क्लुपिया पलासी)* | १० |
| | ०३०३.५३.०० | --सार्डिनहरु *(सार्डिना पिल्कार्डस्, सार्डिनोप जातहरु)*, सार्डिनेला *(सार्डिनेला जातहरु)*, ब्रिसलिङ वा स्प्राट्स *(स्प्राटस स्प्राटस)* | १० |
| | ०३०३.५४.०० | --म्याकरेल *(स्कम्बर स्कम्ब्रस, स्कम्बर अस्ट्रेलासिकस, स्कम्बर जापोनिकस)*, | १० |
| | ०३०३.५५.०० | --ज्याक र हर्ष म्याकरेल *(ट्राचुरुस जातहरु)*, | १० |
| | ०३०३.५६.०० | --कोबिआ *(राकिसेन्ट्रोन कानाडम)* | १० |
| | ०३०३.५७.०० | --सोर्डफिस *जिफियास ग्लाडिअस)* | १० |
| | | -कलेजो र फुलहरु बाहेकका *ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछा : | |
| | ०३०३.६३.०० | --कड *(ग्याडुस मरहुआ, ग्याडुस ओग्याक, ग्याडुस म्याक्रोसिफालस)* | १० |
| | ०३०३.६४.०० | --ह्याड्डक *(मेलानोग्रामस एग्लेफिनस)* | १० |
| | ०३०३.६५.०० | --कोलफिस *(पोलाकिअस भिरेन्स)* | १० |
| | ०३०३.६६.०० | --हेक *(मर्लुसिअस जातहरु, यूरोफिसिस जातहरु)* | १० |
| | ०३०३.६७.०० | --अलास्का पोलाक (थिरेग्रा काल्कोग्रामा) | १० |
| | ०३०३.६८.०० | --ब्लु ह्वाइटिङहरु *(माइक्रोमेसिस्टस पोटासु, माइक्रोमेसिस्टस अस्ट्रालिस)* | १० |
| | ०३०३.६९.०० | --अन्य | १० |

| | | | |
|---|---|---|---|
| | | -कलेजो र फुलहरु बाहेक, अन्य माछाः | |
| | ०३०३.८१.०० | --डगफिस र अन्य सार्कहरु | १० |
| | ०३०३.८२.०० | --रेइहरु र स्केटहरु *(राजिडाइ)* | १० |
| | ०३०३.८३.०० | --टूथफिस *(डिसोस्टिकस जातहरु)* | १० |
| | ०३०३.८४.०० | --सिबास (*डिसेन्ट्रारकस जातहरु*) | १० |
| | ०३०३.८९.०० | --अन्य | १० |
| | ०३०३.९०.०० | -कलेजो र फुलहरु | १०" |
| | | (२३)उपशीर्षक ०३०४.१ देखि ०३०४.२९.०० सम्मका उपशीर्षकहरुको सट्टा देहायका उपशीर्षकहरु राखिएका छन् :- | |
| | | "-तिलापिया *(ओरेओक्रोमिस जातहरु),* क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु*), कार्प (*साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस*), बाम (इल) (*एङ्गुइला जातहरु*), नाइल पर्च(लेटेस निलोटिकस र स्नेकहेडहरु (*चान्ना जातहरु) का* ताजा वा चिसो पारिएका फिलेटहरु : | |
| | ०३०४.३१.०० | --तिलापियाहरु (*ओरेओक्रोमिस जातहरु*) | १० |
| | ०३०४.३२.०० | --क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु*) | १० |
| | ०३०४.३३.०० | --नाइल पर्च *(ल्याटेस निलोटिकस)* | १० |
| | ०३०४.३९.०० | --अन्य | १० |
| | | -अन्य माछाका ताजा वा चिसो पारेको फिलेटहरुः | |
| | ०३०४.४१.०० | --प्यासिफिक साल्मोन (*अङ्कोरिङ्कस नेर्का, अङ्कोरिङ्कस गोर्बुसा, अङ्कोरिङ्कस केटा, अङ्कोरिङ्कस शावित्चा, अङ्कोरिङ्कस किसुच, अङ्कोरिङ्कस मासोउ तथा अङ्कोरिङ्कस रोडुरस*), एटलान्टिक साल्मोन*(साल्मो सालार)* र ड्यान्युब साल्मोन *(हूचो हुचो)* | १० |

| | | | |
|---|---|---|---|
| | ०३०४.४२.०० | --ट्राउट *(साल्मो ट्रटा, अङ्कोरिङ्कस माइकिस, अङ्कोरिङ्कस क्लार्की, अङ्कोरिङ्कस अक्वाबोनिटा, अङ्कोरिङ्कस गिलाइ, अङ्कोरिङ्कस अपाचे र अङ्कोरिङ्कस क्राइसोगेष्टर)* | १० |
| | ०३०४.४३.०० | --च्याप्टो माछा (फ्लाट फिस) *(ल्यूरोनेक्टिडाइ, बोथिडाइ, साइनो ग्लोसीडाइ, सोलेइडाइ, स्कोपथाल्मिडाइ तथा सिथारीडाइ)* | १० |
| | ०३०४.४४.०० | --*ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछाका | १० |
| | ०३०४.४५.०० | --सोर्डफिस *(जिफियाज ग्ल्याडिअस)* | १० |
| | ०३०४.४६.०० | --टुथफिस *(डिसोस्टिकस जातहरु)* | १० |
| | ०३०४.४९.०० | --अन्य | १० |
| | | -अन्य, ताजा वा चिसो पारेको : | |
| | ०३०४.५१.०० | --तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु)*, क्याटफिस *(प्याङ्गासिस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु)*, कार्प *(साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस)*, बाम (इल) *(एङ्गुइला जातहरु)*, नाइल पर्च *(लेटेस निलोटिकस)* र स्नेकहेड *(चान्ना जातहरु) का* | १० |
| | ०३०४.५२.०० | --साल्मोनीडाइका | १० |
| | ०३०४.५३.०० | --*ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछाका | १० |
| | ०३०४.५४.०० | --सोर्डफिस *(जिफियाज ग्ल्याडिअस)* का | १० |
| | ०३०४.५५.०० | --टुथफिस *(डिसोस्टिकस जातहरु)* का | १० |
| | ०३०४.५९.०० | --अन्य | १० |

| | | | |
|---|---|---|---|
| | | -तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु)*, क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु)*, कार्प *(साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस)*, वाम (इल) हरु *(एङ्गुइला जातहरु)*, नाइल पर्च *(ल्याटेस निलोटिकस)* र स्नेकहेड्हरु *(चान्ना जातहरु)* का हिमीकृत फिलेटहरु : | |
| | ०३०४.६१.०० | --तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु)* का | १० |
| | ०३०४.६२.०० | --क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु)* का | १० |
| | ०३०४.६३.०० | --नाइल पर्च *(ल्याटेस निलोटिकस)* का | १० |
| | ०३०४.६९.०० | --अन्य | १० |
| | | -*ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछाका हिमीकृत फिलेटहरु : | |
| | ०३०४.७१.०० | --कड *(ग्याडुस मरहुआ, ग्याडुस ओग्याक, ग्याडुस म्याक्रोसिफालस)* का | १० |
| | ०३०४.७२.०० | --ह्याड्डक*(मेलानोग्रामस एग्लेफिनस)* का | १० |
| | ०३०४.७३.०० | --कोलफिस *(पोलाकिअस भिरेन्स)* का | १० |
| | ०३०४.७४.०० | --हेक *(मर्लुसिअस जातहरु, यूरोफिसिस जातहरु)* का | १० |
| | ०३०४.७५.०० | --अलास्का पोलाक *(थिरेग्रा काल्कोग्रामा)* का | १० |
| | ०३०४.७९.०० | --अन्य | १० |
| | | -अन्य माछाका हिमीकृत फिलेटहरुः | |

| | | |
|---|---|---|
| ०३०४.८१.०० | --प्यासिफिक साल्मोन (*अङ्कोरिङ्कस नेर्का, अङ्कोरिङ्कस गोर्बुसा, अङ्कोरिङ्कस केटा, अङ्कोरिङ्कस शावित्चा, अङ्कोरिङ्कस किसुच, अङ्कोरिङ्कस मासोउ तथा अङ्कोरिङ्कस रोडुरस*), एटलान्टिक साल्मोन(*साल्मो सालार*) र ड्यान्युब साल्मोन (*हूचो हुचो*) का | १० |
| ०३०४.८२.०० | --ट्राउट (*साल्मो ट्रटा, अङ्कोरिङ्कस माइकिस, अङ्कोरिङ्कस क्लार्की, अङ्कोरिङ्कस अक्वाबोनिटा, अङ्कोरिङ्कस गिलाइ, अङ्कोरिङ्कस अपाचे र अङ्कोरिङ्कस क्राइसोगेष्टर*) का | १० |
| ०३०४.८३.०० | --च्याप्टो माछा (फ्लाट फिस) (*ल्यूरोनेक्टिडाइ, बोथिडाइ, साइनो ग्लोसीडाइ, सोलेइडाइ, स्कोपथाल्मिडाइ तथा सिथारीडाइ*) का | १० |
| ०३०४.८४.०० | --सोर्डफिस (*जिफियाज ग्ल्याडिअस*) का | १० |
| ०३०४.८५.०० | --टुथफिस (*डिसोस्टिकस जातहरु*) का | १० |
| ०३०४.८६.०० | --हेरिङहरु (*क्लुपिया हेरेङ्गस, क्लुपिया पलासी*) का | १० |
| ०३०४.८७.०० | --टुनाहरु (*थुनुस* जातका) स्किप ज्याक वा स्ट्रिप-वेलिड वोनितो (*युथिनस (कासुवनस) पेलामिस*) का | १० |
| ०३०४.८९.०० | --अन्य | १०" |
| | (२४) उपशीर्षक ०३०४.९ को "-अन्य:" भन्ने शब्दको सट्टा "-अन्य, हिमीकृत:" भन्ने शब्दहरु राखिएका छन् :- | |
| | (२५) उपशीर्षक ०३०४.९२.०० पछि देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |
| "०३०४.९३.०० | --तिलापियाहरु (*ओरेओक्रोमिस जातहरु*), क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु*), कार्प (*साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस*), बाम (इल) हरु (*एङ्गुइला जातहरु*), नाइल पर्च (*ल्याटेस निलोटिकस*) र स्नेकहेड (*चान्ना जातहरु*) का | १० |

| | | | |
|---|---|---|---|
| | ०३०४.९४.०० | --अलास्का पोलाक (*थिरेग्रा काल्कोग्रामा*) का | १० |
| | ०३०४.९५.०० | --अलास्का पोलाक (*थिरेग्रा काल्कोग्रामा*) बाहेक, *ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछाका | १०" |
| | | (२६) उपशीर्षक ०३०५.३०.०० को सट्टा देहायका शब्दावली र उपशीर्षकहरु राखिएका छन् :- | |
| | | "-सुकाएको, नुनिलो पारेको वा नून पानीमा हालेको तर धूमित नगरेका माछाको फिलेटहरु : | |
| | ०३०५.३१.०० | --तिलापियाहरु (*ओरेओक्रोमिस जातहरु*), क्याटफिस (*प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु*), कार्प (*साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस*), बाम (इल) (*एङ्गुइला जातहरु*), नाइल पर्च (*ल्याटेस निलोटिकस*) र स्नेकहेड (*चान्ना जातहरु*) का | १० |
| | ०३०५.३२.०० | --*ब्रेग्मासिरोटाइडाइ, युक्लिच्थाइडाइ, गाडिडाइ, म्याक्रोउराइडाइ, मेलानोनाइडाइ, मर्लुस्सिडाइ, मोरिडाइ र मुराइनोलेपिडिडाइ* परिवारहरुका माछाका | १० |
| | ०३०५.३९.०० | --अन्य | १०" |
| | | (२७) उपशीर्षक ०३०५.४ को सट्टा देहायको उपशीर्षक ०३०५.४ राखिएको छ :- | |
| | | "-माछाको खानयोग्य कमसल मासु बाहेक, धूमित माछा, फिलेटहरु समेत:" | |
| | | (२८) उपशीर्षक ०३०५.४२.०० पछि देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | "०३०५.४३.०० | --ट्राउट (*साल्मो ट्रटा, अङ्कोरिङ्कस माइकिस, अङ्कोरिङ्कस क्लार्की, अङ्कोरिङ्कस अक्वाबोनिटा, अङ्कोरिङ्कस गिलाइ, अङ्कोरिङ्कस अपाचे र अङ्कोरिङ्कस क्राइसोगेष्टर*) को | १० |

| | | | |
|---|---|---|---|
| | ०३०५.४४.०० | --तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु),* क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु),* कार्प *(साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस),* बाम (इल) *(एङ्गुइला जातहरु),* नाइल पर्च *(ल्याटेस निलोटिकस)* र स्नेकहेड *(चान्ना जातहरु)* का | १०" |
| | | (२९) उपशीर्षक ०३०५.५ को सट्टा देहायको उपशीर्षक ०३०५.५ राखिएको छ :- | |
| | | "-माछाको खानयोग्य कमसल मासु बाहेक, सुकाएको माछा, नून हालेको वा नहालेको तर धूमित नगरेको :" | |
| | | (३०) उपशीर्षक ०३०५.६ को सट्टा देहायको उपशीर्षक ०३०५.६ राखिएको छ :- | |
| | | "-माछाको खानयोग्य कमसल मासु बाहेक, नून हालेको तर नसुकाइएको वा धूमित नगरेको र नूनपानीमा राखेको माछा :" | |
| | | (३१) उपशीर्षक ०३०५.६३.०० पछि देहायको उपशीर्षक थप गरिएको छ :- | |
| | "०३०५.६४.०० | --तिलापियाहरु *(ओरेओक्रोमिस जातहरु),* क्याटफिस *(प्याङ्गासिअस जातहरु, सिलुरस जातहरु, क्लारिअस जातहरु, इक्टालुरस जातहरु),* कार्प *(साइप्रिनस कार्पियो, क्यारासिअस क्यारासिअस, सेनोफारिङ्गोडोन इडेलस, हाइपोफ्थाल्मिच्थिस जातहरु, सिर्हिनस जातहरु, माइलोफारिङ्गोडोन पिसिअस),* बाम (इल) *(एङ्गुइला जातहरु),* नाइल पर्च *(ल्याटेस निलोटिकस)* र स्नेकहेड *(चान्ना जातहरु)* का | १०" |
| | | (३२) उपशीर्षक ०३०५.६९.०० पछि देहायका शब्दावली र उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | | "-माछाको पखेटा, टाउकाहरु, पुच्छरहरु, भुँडीहरु र माछाको अन्य खानयोग्य कमसल मासु : | |

| | | | |
|---|---|---|---|
| | ०३०५.७१.०० | --सार्कका पखेटाहरु | १० |
| | ०३०५.७२.०० | --माछाको टाउका, पुच्छर र भुँडीहरु | १० |
| | ०३०५.७९.०० | --अन्य | १०" |
| | | (३३) शीर्षक ०३.०६ को शीर्षक मूलपाठको सट्टा देहायको शीर्षक मूलपाठ राखिएको छ :- | |
| "०३.०६ | | **खबटा भित्र भएको वा नभएको जीवित, ताजा, चिसो पारेको, हिमीकृत, सुकेको, नूनिलो गरेको वा नून पानीमा हालेको कुष्टासियन; खबटा भित्र भएको वा नभएको, धूमित गर्ने प्रक्रियामा वा धूमित गर्नुअघि पकाएको वा नपकाएको धूमित कुष्टासियन; खबटाभित्र भएको पानीमा उमालेर वा बफाएर पकाएको, चिसो, हिमीकृत, सुख्खा र नूनिलो पारिएको वा नपारिएको, नून पानीमा हालेको वा नहालेको क्रुष्टासियनहरु; क्रुष्टासियनहरुको मानवीय उपभोगका लागि उपयुक्त खान हुने धुलो, पिठो र गुटिका (पेलेट) हरु ।"** | |
| | | (३४) उपशीर्षक ०३०६.१३.०० झिकिएको छ :- | |
| | | (३५) उपशीर्षक ०३०६.१४.०० पछि देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | "०३०६.१५.०० | --नर्वे लब्स्टरहरु (*नेफ्रोप्स नर्वेजिकस*) | १० |
| | ०३०६.१६.०० | --चिसो पानीका स्रिम्पहरु र प्राउनहरु (*पाण्डालस जातहरु, क्राङ्गन क्राङ्गन*) | १० |
| | ०३०६.१७.०० | --अन्य स्रिम्पहरु र प्राउनहरु | १०" |
| | | (३६) उपशीर्षक ०३०६.२३.०० झिकिएको छ :- | |
| | | (३७) उपशीर्षक ०३०६.२४.०० पछि देहायका उपशीर्षकहरु थप गरिएका छन् :- | |
| | "०३०६.२५.०० | --नर्वे लब्स्टरहरु (*नेफोप्स नर्वेजिकस*) | १० |
| | ०३०६.२६.०० | --चिसो पानीको स्रिम्पहरु र प्राउनहरु (*पाण्डालस जातहरु, क्राङ्गन क्राङ्गन*) | १० |
| | ०३०६.२७.०० | --अन्य स्रिम्पहरु र प्राउनहरु | १०" |

| | | | |
|---|---|---|---|
| | | (३८) शीर्षक ०३.०७ को शीर्षक मूलपाठको सट्टा देहायको शीर्षक मूलपाठ राखिएको छ :- | |
| "०३.०७ | | **खबटाभित्र भएको वा नभएको, जीवित, ताजा, चिसो पारिएको, हिमीकृत, सुकाएको, नुनिलो पारिएको वा नून पानी हालेको मोलस्कहरु; खबटाभित्र भएको वा नभएको, धूमित गर्ने क्रममा वा गर्नुअघि पकाएको वा नपकाएको धूमित मोलस्कहरु; मोलस्कहरुका मानवीय उपभोगका लागि उपयुक्त खान हुने पीठो, धूलो र गुटिका (पेलेट) हरु।"** | |
| | | (३९) उपशीर्षक ०३०७.१०.०० को सट्टा देहायको शब्दावली र उपशीर्षकहरु राखिएका छन् :- | |
| | | "-सीपी (ओइस्टर) हरुः | |
| | ०३०७.११.०० | --जीवित, ताजा वा चिसो पारिएको | १० |
| | ०३०७.१९.०० | --अन्य | १०" |
| | | (४०) उपशीर्षक ०३०७.९ देखि ०३०७.९९.०० सम्मका उपशीर्षकहरुको सट्टा देहायका शब्दावली र उपशीर्षकहरु राखिएका छन् :- | |
| | | "-क्लामहरु, काकलहरु र आर्क सेलहरु (*आर्सिडाइ, आर्कटिसिडाइ, कार्डिडाइ, डोनासिडाइ, हिटेलीडाइ, म्याक्ट्रिडाइ, मेसोडेसम्याटिडाइ, माइडाइ, सेमिलिडाइ, सोल्कर्टिडाइ, सोलेनिडाइ, ट्रिडाक्निडाइ,* र *वेनेरिडाइ* परिवारहरु) : | |
| | ०३०७.७१.०० | --जीवित, ताजा वा चिसो पारेको | १० |
| | ०३०७.७९.०० | --अन्य | १० |
| | | -अबालोन (*हालिओटिस जातहरु*) | |
| | ०३०७.८१.०० | --जीवित, ताजा वा चिसो पारेको | १० |
| | ०३०७.८९.०० | --अन्य | १० |
| | | -अन्य, **मानवीय उपभोगका लागि उपयुक्त** खान हुने पीठो, धूलो र प्यालेट समेतः | |
| | ०३०७.९१.०० | --जीवित, ताजा वा चिसो पारेको | १० |

